









# हामी के कम

## नेतृत्वदायी भूमिकामा रहेका महिलाका प्रेरणादायी कथा

# हामी के कम

## नेतृत्वदायी भूमिकामा रहेका महिलाका प्रेरणादायी कथा

लेखन : सुबोध गौतम







अक्स्फामका लागि रेडियो सगरमाथाद्वारा तयार पारिएको
२०७२ वैशाख

# हामी के कम

**नेतृत्वदायी भूमिकामा रहेका महिलाका प्रेरणादायी कथा**


| | | |
|---|---|---|
| **प्रकाशक** | : | रेडियो सगरमाथा<br>भनिमण्डल, काठमाडौं |
| **प्रकाशन मिति** | : | २०७२ वैशाख |
| **सर्वाधिकार** | : | प्रकाशकमा |
| **लेखन** | : | सुबोध गौतम |
| **आलेख सम्पादन** | : | शिव अधिकारी |
| **साजसज्जा** | : | रविन सायूमि |
| **संयोजन** | : | लक्ष्मण उप्रेती |

# प्रकाशकीय

महिलालाई सकारात्मक परिवर्तन र नेतृत्व क्षमता विकासका गतिविधिमा संलग्न गरिनुपर्छ, जसले गर्दा हाम्रो समाजमा भएको कुरीति र अन्धविश्वासलाई सजिलैसँग परास्त गर्न सकियोस्। सामाजिक सोचमा परिवर्तन हुँदामात्र महिला अधिकारसम्पन्न हुनेछन्। महिला अधिकारसम्पन्न भएपछि मात्र विद्यमान भेदभाव अन्त्य हुनेछ।

नेपाली समाजमा जन्मिनेबित्तिकै विभेदको सुरुवात हुन्छ। छोरा र छोरीबीचको भेदभाव बाल्यकालदेखि नै हुन्छ। छोरालाई पढाएपछि आफ्नो रेखदेख गर्छ, छोरीलाई विवाह गरेर अर्काको घर पठाउने हो भन्ने गलत मान्यताले समाजमा जरा गाडेको छ। उनीहरूलाई शिक्षादीक्षामा मात्र नभई खानपान र समग्र विकासमा भेदभाव गरिन्छ।

यस्ता मान्यता, कुरीति र सोचले गर्दा महिलालाई पछि पारिएको हो भन्ने तथ्य मनन गर्ने समूह पनि छ। राज्यले पनि यो लैंगिक भेदभाव अन्त्यका लागि सक्दो पहल गरेको छ तर पर्याप्त छैन। त्यसैले समाजिक कार्यमा लागेका व्यक्ति, समूह, राष्ट्रिय तथा अन्तर्राष्ट्रिय समुदाय महिला-पुरुषबीचका कुनै पनि भेदभाव र कुरीति अन्त्यका लागि क्रियाशील छन्। आमसोच परिवर्तन गर्ने काम सबैतिरबाट भएका छन्- ऐन, कानुन परिवर्तन गरेर,

जनचेतनाका कार्यक्रम सञ्चालन गरेर वा स्थानीय तहमा महिला सशक्तीकरणका छुट्टै कार्यक्रम सञ्चालन गरेर। सबै क्षेत्रको सामूहिक प्रयासले महिलाको शैक्षिक स्तर पहिलाको तुलनामा बढ्दै गएको छ। शैक्षिक अधिकारसँगै उनीहरूको नेतृत्व क्षमताको विकास र नेतृत्व अधिकारका लागि पनि विभिन्न संघसंस्थामार्फत कार्यक्रम सञ्चालन भइरहेका छन्।

यसै सिलसिलामा गाउँका महिलामा देखिएको नेतृत्व विकास र क्षमताबारे अध्ययन गर्ने उद्देश्यले नेपाल वातावरण पत्रकार समूह (नेफेज) र रेडियो सगरमाथाको पत्रकार टोलीले सुर्खेत र मकवानपुरका नगरपालिका र गाविसको स्थलगत अध्ययन गरेको थियो। उक्त अध्ययन अक्स्फाम नेपालले आफ्ना कार्यक्रम सञ्चालन गरेका स्थानका महिलामा देखिएको नेतृत्व विकास र क्षमताबारे गरिएको थियो। साथै उनीहरूले नेतृत्व गरेको संघसंस्थाको प्रगति र उपलब्धिबारे पनि गहिरिएर अध्ययन गर्ने मौका टोलीले पाएको थियो। यही अध्ययन र रिपोर्टिङबाट प्राप्त सूचना र उदाहरणलाई यस पुस्तकमा समेट्ने प्रयास गरिएको छ। बोल्न नसक्ने, बाहिरी मान्छे देख्नेबित्तिकै डराउने, हस्ताक्षर गर्न नसक्ने र संघसंस्थाबारे केही पनि जानकारी नभएका महिला अहिले हाकाहाकी आफ्ना अधिकारबारे बहस गर्न थालेका छन्, सरकारी तथा गैरसरकारी संघसंस्थामा गएर आफ्ना माग राख्नसक्ने भएका छन्। महिलामा आएका यस्ता परिवर्तनले ग्रामीण भेगका महिला सशक्त हुन थालेको आभाष हुन्छ। यिनै उपलब्धिलाई उदाहरणसहित यस पुस्तकमा समेट्ने जमर्को गरिएको छ।

पत्रकार टोलीले अक्स्फाम नेपालले महिला नेतृत्व कार्यक्रम सञ्चालन गरेका क्षेत्रको स्थलगत भ्रमण गरेको थियो। जुन कार्यक्रम विगतमा महिला आवाज कार्यक्रमको नामबाट सञ्चालित थियो। दोस्रो तहको कार्यक्रमअन्तर्गत अहिले यसलाई महिला नेतृत्व कार्यक्रम बनाइएको हो। महिला

आवाज परियोजनाको उपलब्धि र सिकाइबाट नेतृत्व तहमा गएका महिलालाई प्रभावकारी भूमिकासहित माथिल्लो तहमा जानका लागि सहजीकरण गर्ने तथा सुर्खेतका दुई नयाँ गाविस र मकवानपुरमा पनि महिला नेतृत्व तयार गर्ने उद्देश्यले यो कार्यक्रम सञ्चालन भएको हो ।

सीमान्तकृत तथा गरिब महिलाको नेतृत्व विकास, संगठन निर्माण, परिचालन तथा सञ्जालीकरण गर्दै घरदेखि सामाजिक तथा राजनीतिक क्षेत्रमा उनीहरूको प्रभावकारितालाई बलियो बनाउने, समुदायस्तरका उनीहरूको अनुभवमा आधारित रहेर नीतिगत तहसम्म प्रभाव पार्दै समाजमा (विशेषगरी ती महिलाको घर तथा समुदायमा) महिला तथा पुरुषबीच लैंगिक सम्बन्धमा सुधार ल्याउने यस कार्यक्रमको प्रमुख लक्ष्य रहेको छ । लक्ष्यप्राप्तितर्फ कार्यक्रम अघि बढेको छ कि छैन भनी नेपाल वातावरण पत्रकार समूह एवं रेडियो सगरमाथाको टोली स्थलगत भ्रमणमा गएको थियो ।

त्यसैका आधारमा तयार गरिएको यो पुस्तक रेडियो सगरमाथा र अक्स्फामबीच भएको सहकार्यको प्रतिफल हो । पुस्तक तयार पार्ने क्रममा संलग्न रेडियो सगरमाथा र नेपाल वातावरण पत्रकार समूहका सहकर्मीहरू लक्ष्मण उप्रेती, सुशील मैनाली, प्रवीण अधिकारी तथा अक्सफाम नेपालका विनय धिताल, आस्था रिजाल र सन्ध्या श्रेष्ठलाई धन्यवाद ! पुस्तकका लागि स्थलगत अध्ययन गरी मीठो र सरल प्रस्तुतीकरण गरिदिने समूह सदस्य सुबोध गौतमलाई विशेष धन्यवाद ! अन्त्यमा नयाँ वर्ष २०७२ को हार्दिक मंगलमय शुभकामना !

**सहज मान श्रेष्ठ**
अध्यक्ष
रेडियो सगरमाथा कार्यसञ्चालन समिति
भनिमण्डल, चक्रपथ, ललितपुर
वैशाख, २०७२

# विषय सूची

पार्वता कार्की

भेरीगंगा नगरपालिका-५, मैनतडा, कार्की टोल



# कथा ८३,२४० रूपैयाँको

कुनै पनि महिलाको सफलताको पछाडि उसको परिवारको ठूलो हात हुन्छ भन्ने पार्वताको ठहर छ । 'मेरो घरमा मेरो ससुराले धेरै सहयोग गर्नुभएको छ, उहाँ आफू पनि पहिले स्थानीय नेता भएकाले होला,' पार्वता भन्छिन्, 'उहाँको सहयोग नभएको भए म अगाडि बढ्न सक्दिनथेँ ।'

'खै कहाँ छ हामीले बुझाएको पैसा ?'

उनको यही प्रश्नले वर्षौंदेखिको बेथिति भण्डाफोर भयो। यस्तो प्रश्न गर्न सक्ने उनीभन्दा धेरै पाका महिला गाउँटोलमा थिए। तर, अघि सरिन् २६ वर्षीया पार्वता कार्की।

ठाउँमै पुगेर सम्बन्धित व्यक्तिलाई सिधा प्रश्न सोधेपछि वर्षौंदेखि हिनामिना हुँदै आएको रकममात्र असुल भएन, स्थानीय समाजमा पारदर्शिता र जवाफदेहिता पनि स्थापित भयो।

भेरीगंगा नगरपालिका-५, मैनतडा, कार्की टोलकी पार्वताले सरकारी बाँझो जग्गाको आम्दानी हिनामिना भएपछि उक्त प्रश्न गरेकी थिइन्। 'प्रश्न गर्ने वातावरण बनाउन मलाई कम्ती हैरानी भएन,' उनी भन्छिन्, 'सजिलै उठाइएको होइन ८३ हजार २ सय ४० रूपैयाँ।'

कार्की टोलमै रहेको दमार क्षेत्रको आम्दानी हिनामिना भएपछि स्थानीय महिला असन्तुष्ट थिए। तिनै असन्तुष्ट महिला आवाजलाई नेतृत्व दिइन्, पार्वताले। झन्डै १०-१२ वर्षदेखि दमारको आम्दानीमा सीमित व्यक्तिले भोगचलन गर्दै आएका थिए। यो जग्गा राष्ट्रिय वन होइन, चुरेमा रहेको बाँझो भिरपाखो हो, जहाँ झाडी-बुट्यान र सालका रुख छन्।

सयौं हेक्टर क्षेत्रफलको यो जग्गा व्यवस्थापन गर्ने नाममा एक दशकअघि बनेको दमार वन संरक्षण उपभोक्ता समिति र तिनका पदाधिकारीले आम्दानीमा मनलागी गरिरहेका थिए। त्यो आम्दानी भनेको स्थानीय उपभोक्ताले तिरेको कर नै हो। 'सरकारी सम्पत्ति उपभोग गरेबापत उपभोक्ताले तिरेको कर केही व्यक्तिले मात्र कहाँ चलाउन पाइन्छ र ?' टोल-समाजमा यो प्रश्न भित्रभित्रै उठिरहेको थियो। तर, कसैले सोध्ने हिम्मत गरेका थिएनन्।

'पुरुषहरू उतै मिल्ने र महिला बोल्न नसक्ने अवस्था थियो,' पार्वताले भनिन्।

दमार क्षेत्रमा घाँस, दाउरा, थागल, खर, ढलेर सुकेका काठ, स्याउलालगायत वस्तु निकाल्न स्थानीयले पुर्जी काट्ने व्यवस्था थियो। त्यसबापत एउटा निश्चित रकम दमार कार्य समितिलाई बुझाउनुपर्थ्यो। यसरी बुझाएको रकम समितिका केही पदाधिकारीले भोगचलन गर्दै आएका थिए।

पार्वताका अनुसार करिब एक दशक अघिदेखिको पैसा हिसाबकिताब गरिएको थिएन।



समितिका अधिकारीले आ-आफ्नो किसिमले जहाँ मन लाग्यो त्यहीँ बसेर पुर्जी काट्थे। र, पैसा उठाउँथे। हिसाबकिताब राख्ने चलनै थिएन।

'चाउचाउको कार्टुनलाई टुक्रा बनाउने र त्यसैमा नम्बर लेखेर पुर्जी दिने गरिन्थ्यो। पैसा लिइन्थ्यो तर रसिद दिने चलन थिएन,' पार्वताले दमार समितिको बेथिति सुनाइन्। गाउँटोल समाज सबैलाई यस्तो बेथितिबारे थाहा थियो तर कसैले आवाज उठाएका थिएनन्।

समाजमा उनीभन्दा पाका र उमेर खाएका महिला धेरै थिए। तिनले यो बेथितिबारे अघि सरेर कुरा उठाउने हिम्मत गरेनन्। 'अलिअलि पढेलेखेको र टाठोबाठो ऊ नै थिई, त्यसैले हामी सबै मिलेर उसलाई अघि सार्‍यौं,' पार्वताकी गुरु जीवनज्योति महिला छलफल केन्द्रकी अध्यक्ष विष्णु रोकायाले भनिन्, 'ऊ अघि बढी, हामी सबैले पछाडिबाट सहयोग गर्‍यौं।'

पार्वता माथिल्लो कार्की टोलमा रहेको हरियाली चिसापानी सामुदायिक वनकी सचिव

पनि हुन् । उनी आफ्नो वन हराभरा भएको देख्छिन् । उजाड हुँदै गएको वन एक वर्षअघि मात्र सामुदायिक वनमा दर्ता गरेको सम्झन्छिन् । यसले बर्सेनि आम्दानी गरिरहेको छ भन्ने पनि उनलाई थाहा छ। यसबाट उपभोक्ताको आवश्यकता पूरा भएको छ। तर, नजिकैको सरकारी दमार क्षेत्र दिनप्रतिदिन फडानी भइरहेको छ। हरिया रुख मासिएका छन्। चरिचरण जथाभाबी छ। पुर्जीका नाममा उठाइएको पैसा पनि हिनाहिना भएको छ। समितिका पदाधिकारीले मनलागी रुख काटेर व्यक्तिगत प्रयोग गरिरहेका छन्। सार्वजनिक सुनवाइ कहिल्यै हुँदैन । कार्य समिति बैठक पनि कहिल्यै बोलाइँदैन ।

'यी सबै कुरा मनमा खेलिरहे, आखिर यो वन पनि त हामीले नै गरेर भएको हो । त्यो दमारलाई पनि किन नबनाउने भन्ने सोच मनमा एकाएक आयो । यो कुरा मैले आफ्नो समूहमा राखेँ, समूहका अग्रज महिलाले तिमी अलि पढेलेखेकी छौ, टाठीबाठी पनि छौ, तिमी अघि बढ हामी सहयोग गर्छौं भन्नुभयो,' पार्वता भन्छिन् ।

पार्वता सचिव रहेको वन समूहको कार्यसमितिमा अध्यक्ष र सहसचिवबाहेक अन्य सबै पदमा महिला छन् ।

'मैले दमारको कुरा आफ्नो वनको अध्यक्षसँग पनि राखेँ, उहाँले पनि हामीलाई दमारको अनियमितता सार्वजनिक गर्न हौसला दिनुभयो,' पार्वता भन्छिन्, 'तल्लो टोलका पढेलेखेका बुद्धिजीवी पुरुषले पनि उत्साह बढाइदिनुभयो ।'

सबैतिरबाट उत्प्रेरणा पाएपछि दमारको रकम असुल गर्ने अठोटसहित ०७१ साउनमा महिला आन्दोलन सुरु भयो। पहिलोपटक पार्वता एक्लै दमार वन संरक्षण उपभोक्ता समितिका अध्यक्ष नरबहादुर वलीलाई भेटन गइन् । उनले उपभोक्ता सम्मिलित बैठक डाक्न बारम्बार वलीलाई आग्रह गरिन् तर उनको सुनुवाइ भएन । 'पछि धेरै महिला गएर भन्यौं, त्यतिबेला पनि टेरपुच्छर लगाउनुभएन,' उनले भनिन्, 'मेरो दोस्रो प्रयास पनि असफल भयो ।'

पार्वताका अनुसार तेस्रोपटक टोलभरका महिला एकजुट भएर गएपछि मात्र वलीले बैठकको मिति तय गरे । अध्यक्षसहित दमार समितिका केही पदाधिकारी बैठकमा आए । अन्य पुरुष भने बैठकमा सहभागी नै भएनन् । यही पहिलो बैठकमा पार्वताले अध्यक्षलाई सोधेकी हुन्, दमार क्षेत्रको कमाइको हिसाबकिताब ।



उनको अर्को प्रश्न थियो- 'हिनामिना भएको पैसा र वन बचाउन कतैबाट कोसिस नहुँदा हाम्रो त मन दुख्छ, तपाईंको दुख्दैन ?'

महिलाहरूबाट प्रश्नका वाण बर्सिन थालेपछि अध्यक्षले यसरी जबाफ दिएका थिए, 'पैसा कतै गएको छैन, हामीले चलाइरहेका छौं, बुझाउँछौं ।

'अध्यक्षको जबाफपछि हामी केही ढुक्क भयौं,' पार्वताले भनिन्, 'कति पैसा क-कसले चलाइरहेको छ, त्यसको हिसाबकिताब पनि माग्यौं ।'

हिनामिनाको जानकारी तल्लो टोलका महिलालाई पनि थियो । तर, उनीहरूमा भण्डाफोर गर्ने आँट थिएन । पार्वताका अनुसार सबै विषय भण्डाफोर भएपछि हिसाबकिताबको खोजी भयो । महिलाहरूले समितिका सबै अधिकारीसँग बसेर छलफल गरे । सबैतिर हल्लीखल्ली मच्चियो । र, अन्तमा ८३ हजार २ सय ४० रूपैयाँको हिनामिना सार्वजनिक भयो । यो पैसा दमार समितिका पदाधिकारी र सदस्यले चलाएको खुल्न आयो । असुल भएको पैसा के गर्ने भन्ने विषयमा दुवै टोलका महिला भेला भए । उनीहरूले त्यो रकम

स्थानीय नेपाल राष्ट्रिय निम्न माध्यमिक विद्यालय खुरिल्लालाई दिने निर्णय गरे । पार्वता यही स्कुल व्यवस्थापन समितिमा संस्थाका तर्फबाट सदस्य पनि छिन् । उनलाई स्कुलको अवस्थाबारे राम्ररी ज्ञान छ । तीन जनामात्र दरबन्दी शिक्षक रहेको यो विद्यालयमा ८ जना शिक्षक स्थानीय स्रोतबाट पढाइरहेका छन् ।

'त्यो रकम बैंकको मुद्दती खातामा राखेर त्यसको ब्याजबाट विद्यालयको विकास निर्माण र विद्यार्थीको छात्रवृत्तिमा खर्च गर्ने भनेर महिला दिदी-बहिनीले निर्णय गर्नुभएको छ,' विद्यालयका प्रधानाध्यापक भुपेन्द्रकुमार रोकायाले भने, 'अहिले त्यो पैसा शौचालय बनाउन खर्च भएको छ । पछि त्यसलाई बैंकमा राखेर निर्णयअनुसारको प्रयोजनमा खर्च गर्नेछौं ।'

०७१ साउनमा सुरु भएको दमार भण्डाफोर अभियान पुस अन्तिममा टुंगिएको थियो । रोकायाका अनुसार महिलाले उठाएको रकम एक वर्षको मात्र हो । 'यो त एक वर्षको हिनामिना रकममात्र हो, त्यसअघि पनि धेरै रकम हिनामिना भएको हुनुपर्छ,' उनी थप्छन् ।

पार्वता नेतृत्वको आन्दोलनले दमारको हिनामिना भएको रकममात्र असुल गरेन, दमार वन संरक्षण उपभोक्ता समितिलाई लोकतान्त्रिक पद्धति अंगाल्न बाध्य पनि बनायो ।

हिनामिना भण्डाफोर भएपछि दमारको पुरानो कार्यसमिति भंग भएको छ । आफ्ना कमी-कमजोरी सार्वजनिक भएकाले पुराना व्यक्ति समितिमा बस्न मानेनन् । अहिले दुवै टोलका महिलाको सक्रियतामा नयाँ तदर्थ समिति गठन गरेका छन् । दमार संरक्षण व्यवस्थापन र सदुपयोगका सबै हिसाबकिताब रजिस्टरमा दर्ता गर्छन् । समय-समयमा उपभोक्ता भेला र सार्वजनिक सुनवाइ पनि गरिरहेको पार्वता बताउँछिन् । सँगसँगै, दमारको वनलाई सामुदायिक वनका रूपमा दर्ता गर्ने पहल पनि सुरु भएको छ ।

'अब जुनसुकै संघ-संस्थामा अनियमितता र रकम हिनामिना हुन दिनुहुँदैन भन्ने चेतना फैलिएको छ, टोल, समाज र छिमेकमा भइरहेका यस्ता जस्तोसुकै बदमासीको भण्डाफोर गर्न हामी सक्छौं भन्ने आत्मविश्वास बढेको छ,' पार्वताले भनिन् ।

एक महिलाका लागि यो आन्दोलन त्यति सहज पक्कै थिएन । छ महिना आफैंमा लामो समय पनि हो । हरेक दिन, हरेक क्षण घर छाडनुपर्ने अवस्था थियो, उनलाई । पारिवारिक



जिम्मेवारी एकातिर थियो भने अर्कातिर सामाजिक संरचनाको नेतृत्वले उनलाई हरेक पल चिमोटिरहन्थ्यो ।

०४५ सालमा जन्मिएकी पार्वताको १६ वर्ष उमेरमै विवाह भएको थियो । उनका ११ र ३ वर्षका दुई छोरा छन् । श्रीमान भारतमै बसेर कमाइ गर्छन् । घरमा ५९ वर्षीय ससुरा चन्द्रबहादुर कार्की र ६० वर्षीया सासू खली कार्की छिन् । तीन भाइमध्ये माहिलाकी श्रीमती हुन् पार्वता । घर एउटै भए पनि तीन भाइको भान्छा छुट्टै छ ।

कुनै पनि महिलाको सफलताको पछाडि उसको परिवारको ठूलो हात हुन्छ भन्ने पार्वताको ठहर छ । अझ त्यसमा पनि कुनै एक सदस्यको भरपुर सहयोग नभएसम्म महिलालाई अघि बढ्न गाह्रो हुने उनी बताउँछिन् । 'मेरो घरमा मेरो ससुराले धेरै सहयोग गर्नुभएको छ । उहाँ आफू पनि पहिले स्थानीय नेता भएकाले होला, बाहिरी समाज र दुनियाँबारे धेरै जानकार हुनुहुन्छ,' पार्वता भन्छिन्, 'उहाँको सहयोग नभएको भए म अगाडि बढ्न सक्दिनथेँ होला ।'

उनको एउटा अनुभव यस्तो छ– पार्वतालाई सुर्खेत, वीरेन्द्रनगरमा एउटा तालिममा भाग लिन जानुपर्ने थियो। त्यतिबेला उनी छलफल केन्द्रकी सहभागी सदस्य मात्र थिइन्। सहजकर्ता थिइन्, विष्णु रोकाया जो अहिले अध्यक्ष छिन्। विष्णुले पार्वतालाई तालिममा पठाउन ससुरासँग आग्रह गरिन्।

त्यो वैशाख महिनाको समय थियो।

'तँ गइस् भने तोरीमा कसले दाइँ लगाउँछ ?' सासूले प्रश्न गरिन्।

पार्वताले जबाफ नदिँदै ससुराले बीचैमा भने, 'म दाइँ लगाउँछु, तिमी तालिममा जाऊ।'

'अघिपछि पनि ससुरा आफैंले घाँस काटेर मलाई छलफल केन्द्र, वन समूह र विद्यालय समितिको बैठकमा भाग लिन पठाउने गर्नुहुन्छ,' पार्वता सम्झन्छिन्।

पार्वताका ससुरा चन्द्रबहादुर बुहारीको वाहवाहीबाट दंग छन्। 'जहाँ पनि अगुवै हुन्छे, चतुर छे नि, हामीले घरमा सहयोग नगरेको भए कसरी गर्न सक्थी र!' उनले सेतो जुंगा सुम्सुम्याउँदै भने, 'घरका काम हामी बूढाबूढीले गर्ने हो। छोरा छोड्छे, कालो झोला भिर्छे र दगुरिरहन्छे।' आफ्नै पहल र जोडमा बुहारीलाई सामाजिक कार्यमा सहभागी गराएको उनको भनाइ छ।

'फलानोकी बुहारी यतिविधि अघि बढी भनेर गाउँभरि चर्चा हुन्छ, म दंग पर्छु, ऊ बाहिर गई भनेर मलाई कुनै पिर छैन,' चन्द्रबहादुरले भने।

पार्वताको अनुभवमा ससुराभन्दा सासू अलि कडा मिजासकी छन्। तैपनि सकी-नसकी बुहारीलाई सहयोग गरेकी छन्।

तोरीबारीमा तोरी उखेल्दै गर्दा भेटिएकी पार्वताकी सासू साँच्चै खरो स्वभावकी रहिछन्। कुरा उठाउनासाथ उनले भनिन्, '६-७ दिन घर नआउँदा रिस उठ्छ। कहिले पिट्न पनि खोज्छु, कहिले चाहिँ टिठ लाग्छ।'

सासूले यसो भनिरहँदा पार्वता छेउमा मुसुमुसु हाँसिरहेकी थिइन्।

उनको सफलताका पछाडि सासूको भूमिका कम छैन। उनका छोरा र सम्पत्ति स्याहार्न

आफू व्यस्त हुने गरेको सासू खलीले बताइन्। 'नजा भन्दा पनि बोल्दै नबोली हिँड्छे,' उनले भनिन्।

सासू-ससुराको जोडबलमा प्रगतिपथमा अघि बढेकी पार्वतालाई श्रीमानले भने त्यति साथ दिएका छैनन्। पार्वता श्रीमानसँगको अनुभव यसरी सुनाउँछिन्, 'भारतमा धेरै बस्ने हुनाले उहाँलाई बुझाउन अलि गाह्रो हुन्छ। जाऊँ त भनेर सोधे नाइँ भन्नुहुन्न तर सँगै जानुहुन्न।'

०५९ सालमा आठ कक्षा उत्तीर्ण गरेकी पार्वता स्थानीय छलफल केन्द्रकी सहजकर्ता पनि हुन्। पहिलेकी छलफल केन्द्रकी सहभागी पार्वता अरूभन्दा निकै अघि बढिसकेको उनकी गुरु विष्णु रोकाया बताउँछिन्।

'म सहजकर्ता हुँदा यसले धेरै राम्रो गरी, लगनशील, नया कुरा सिक्न खोज्ने, निडर र सहयोगी भएकाले नै यो अहिले अरू महिलालाई उछिनेर सहजकर्ता भएकी छ, जुनसुकै कार्यक्रममा प्रभावकारी नेतृत्वको भूमिका निर्वाह गरेकी छ,' रोकायाले भनिन्।

पार्वताले अहिलेसम्म धेरै तालिम, गोष्ठीलगायत कार्यक्रममा भाग लिएकी छन्। नेतृत्व विकास, आधारशीला, रिफलेक्ट, पिआर र टुल्स, भित्ते पत्रिका, सामुदायिक अंक तालिका, पोषण तथा सन्तुलित भोजन, लैंगिक र पूर्व सहकारीजस्ता दर्जनभन्दा बढी तालिम लिइसकेकी पार्वता आफ्नो गाउँबाट सबैभन्दा टाढा गएको ठाउँ नै वीरेन्द्रनगर हो। सरकारले पछिल्लो समय सुर्खेतका छिन्चु, मैनतडा र दशरथपुर गाविसलाई गाँभेर भेरीगंगा नगरपालिका बनाएको छ।

आठ कक्षासम्मको पढाइ, ससुराको सहयोग र लगनशीलताले उनी नेतृत्व तहमा पुगेकी हुन्। १६ वर्षकै उमेरमा वैवाहिक सम्बन्ध गाँसेकी पार्वता माइतकी सात सन्तानमध्ये चौथी हुन्। उनीभन्दा माथिका कुनै पनि दिदीले ६ कक्षाभन्दा बढी उत्तीर्ण गरेका छैनन्। विवाह गरेर घर भित्रिँदा उनी परिवार बाहिरका मान्छे देख्दा पनि डराउँथिइन्। घरबाट बाहिर ननिस्किने उनको स्वभाव थियो। पहिलाकी सहजकर्ता विष्णुको पटक-पटकको आग्रहपछि उनी छलफल केन्द्रमा जान थालेकी हुन्।

उनको नेतृत्वमा दमारको हिनामिना भएको रकम मात्र होइन, स्थानीय तहमा विकास

निर्माणका थुप्रै काम भएका छन् । जीवनज्योति महिला समूहको पहलमा गाउँका घरघर पुग्ने बाटो खनिएको छ। सामुदायिक वनको १ लाख ८० हजार रूपैयाँ खर्च गरेर यो बाटो बनाइएको हो । यसबाट बचेको खर्चले १४ तालबाजा बनाइएको छ। यी बाजा वैवाहिक कार्यक्रममा भाडामा दिइन्छ। विभिन्न वैवाहिक तथा पूजापाठका कार्यक्रममा स्थानीय संस्कृति झल्किने खालका कार्यक्रम पनि गरिन्छ। त्यसबापत निश्चित रकम लिने गरिन्छ।

पछिल्लो समय समूह सामुदायिक भवन बनाउने पहलमा जुटेको छ। भैंसीको खाल बसाल्ने ठाउँमा माटोले पुरेर भवनका लागि जग्गा तयार गरिएको छ। त्यसमा घर बनाउन स्थानीय खोलाबाट आफैंले ढुंगा बोकेर ल्याएका छन् उनले । 'कुनै बेला घरदेखि बाहिर ननिस्किने मान्छे हुँ, घर-व्यवहारमा सीमित थिएँ, अहिले यहाँसम्म आइपुगेकी छु,' पार्वता भन्छिन्, 'अझै धेरै माथि उक्लिनुछ।'

टीका बिसी
अध्यक्ष, नेरा निमावि व्यवस्थापन समिति



# त्यो दिनको यो सफलता

महिला नेतृत्वको विशेषता केलाउँदै टीकाले 'विद्यालयप्रति आमचासो बढेको' बताइन् । 'महिला खटेर काममा लागेको देखियो, कामप्रति लगनशील भएको पनि पाइयो,' उनको भनाइ छ ।

०६९ असोज १३ गते।

त्यो दिन उनी कहिल्यै भुल्दिनन्। पुरुष प्रतिस्पर्धीहरूलाई पराजित गरेर नेपाल राष्ट्रिय निम्न माध्यमिक विद्यालय व्यवस्थापन समितिको नेतृत्वमा पुग्न सफल भएकी थिइन् उनी त्यसै दिन।

जिन्दगीको यो सबभन्दा ठूलो उचाइमा पुग्नु भेरीगंगा नगरपालिका-१२, सुर्खेतकी ३१ वर्षीया टीका बिसीका लागि सजिलो भने थिएन।

आठजना पुरुष उनको प्रतिस्पर्धामा थिए। चुनाव हुने असोज १३ को साँझ ती पुरुष उम्मेदवार टसमस नगरी विद्यालयका कक्षाकोठामा बसिरहेका थिए। उम्मेदवारी फिर्ता लिनुहुन्न भन्ने पुरुषहरूको भिड उत्तिकै थियो।

साँझ छिप्पिँदै गर्दा अध्यक्षकी एक्ली महिला प्रत्यासी टीकालाई उम्मेदवारी फिर्ता लिन विभिन्न दबाब र प्रलोभन देखाइयो। टीका पनि पुरुषभन्दा कम थिइनन्, टसमस भइनन्। सहमतिका नाममा समाजका नागरिक अगुवाले गरेका सबै प्रयास असफल भए।

पुरुष उम्मेदवारहरूको दबाब चिर्न टोलछिमेकका युवा महिला विद्यालय प्रांगणमा भेला भएका थिए। उनीहरूको एउटै स्वर थियो, 'हामीलाई महिला नेतृत्व चाहिन्छ, यहाँ राजनीति गर्न पाइँदैन।'

महिला साथीसंगीको साथ पाएर चुनावी लडाइँमा होमिएकी टीकासामु पुरुष उम्मेदवारहरूको केही जोड चलेन। बिस्तारै एकपछि अर्को पुरुषले धमाधम आफ्नो उम्मेदवारी फिर्ता लिन थाले। ती कसैले पनि महिला उम्मेदवारलाई समर्थन गर्दै उम्मेदवारी फिर्ता लिएको घोषणा भने गरेनन्।

'म महिला उम्मेदवारलाई समर्थन गर्छु भनेर उम्मेदवारी फिर्ता लिने पुरुष कोही भएन, सबैले पुरुषलाई नै समर्थन गरे,' टीकाले त्यो दिन सम्झिँदै भनिन्, 'उनीहरू महिलाले काम गर्न सक्दैनन् भन्दै कक्षाकोठाबाट बाहिरिन्थे।'

आखिरमा चारजना पुरुष टीकाले भनेजस्तै गरी उम्मेदवारी फिर्ता लिएर बाहिरिए। कक्षाकोठामा अध्यक्षका पाँचजना प्रत्यासी बाँकी भए– चार पुरुष र एक्ली टीका।



गोलाप्रथाको कुरा उठ्यो तर टीका सहमत भइनन् ।

'गोलाप्रथाका लागि थुप्रै प्रयास गरिए तर मैले थुतिनँ,' टीकाले भनिन्, 'मैले जिल्ला शिक्षा कार्यालयको प्रक्रियाअनुसारै जानुपर्छ भनेर अडान लिएँ ।'

साँझ परिसकेको थियो । बाहिर नाराजुलुस चलिरहेको थियो । यसबीच छलफल केन्द्रकी शिक्षिका नर्वदा वलीले भनिन्, 'सामान्यतया निमाविमा चुनावमा जानु हुँदैन । सर्वसम्मतबाट हुनुपर्छ ।'

उनले यसो भने पनि विवादको टुंगो लागिसकेको थिएन । कसैले काठमाडौंमा रहेका टीकाका श्रीमानलाई फोन गरेर उम्मेदवारी फिर्ता गराइदिन दबाबसमेत दिएछन् । 'साँझ ६ बजेको थियो, श्रीमानले फोन गरेर गाली गर्नुभो । फोनमै हप्काउनुभो । मैले पछि कुरा गर्छु भनेर फोन राखेँ,' टीकाले घटनाक्रम सम्झिइन् ।

यसबीच केही पुरुषले उनलाई 'श्रीमानबाट कुट्न लगाउँछु' भन्दै धम्की दिए । कसैले 'तेरो घर भाँडिन्छ' भन्दै डर देखाए त कसैले 'श्रीमान नौ डाडापारि छन्, तैंले काम गर्न

भ्याउँदिनस्, फिर्ता लिए हुन्छ' भनेर मनोबल गिराउन खोजे।

टीकालाई यी कुनै पनि डरधम्की र त्रासले छुनसम्म सकेन।

उता, उम्मेदवारी दिएका कतिपय पुरुषको कागजपत्र नै पुगेन। उनीहरूको आठ कक्षा उत्तीर्ण प्रमाणपत्र फेला परेन। यही कारणले उनीहरू उम्मेदवारी फिर्ता लिन बाध्य भए। एक-एक गर्दै पुरुष उम्मेदवार प्रतिस्पर्धाबाट बाहिरिँदै गएपछि अन्तमा पठबहादुर पुनमात्र बाँकी रहे।

पुरुषतर्फबाट पठबहादुर र महिला उम्मेदवार टीका- प्रतिस्पर्धा चर्कै थियो। अन्तिममा पठबहादुरले समितिको सदस्य पदमा टीकासँग सम्झौता गरे।

टीका बिसी सर्वसम्मत अध्यक्ष चुनिइन्। अध्यक्ष पदमा उम्मेदवारी दिन उनले आफ्नो जेठो छोरालाई बोर्डिङ स्कुलबाट झिकेर त्यही विद्यालयमा भर्ना गरेकी थिइन्।

'महिलाले अन्तिमसम्म महिला नेतृत्व भन्दै नाराबाजी गरेपछि एकपटकलाई विचार गरौं न त भनेर मैले आफ्नो उम्मेदवारी फिर्ता लिएँ,' पुनले भने, 'टिकाजीले पनि तपाईंहरू सदस्यमा बसिदिनुस् भनेर बारम्बार आग्रह गर्नुभयो।' अन्तिममा आएर सदस्य पदमा सम्झौता गर्ने थप दुईजना अध्यक्षकै पुरुष प्रत्यासी थिए। 'त्यति सजिलो गरी म अध्यक्ष भएकी होइन,' टीका भन्छिन्, 'यसका पछाडि मेरो माइती, घरपरिवार र टोल-समाजको ठूलो सहयोग छ।'

यसो भन्दै गर्दा उनले एउटा कुरा भन्न छुटाइनन्, 'मेरा हरेक प्रयासमा पुरुषप्रधान सोच र प्रवृत्ति अवरोध भएर खडा भए।'

त्यसो त यहाँसम्म आइपुग्दा उनले धेरै किसिमका अनुभव बटुलिसकेकी छन्। विभिन्न किसिमका तालिम, कार्यशाला र भ्रमणले उनलाई जुझारु र स्पष्ट बनाएको छ। संगिनीहरू उनलाई 'हठी, जिज्ञासु र छिटो बुझ्न सक्ने' साथीका रूपमा चिन्छन्। तिनै साथीहरूको सिफारिस र सल्लाहमा उनी उम्मेदवार भएकी थिइन्।

टीका ०६८ देखि सुरु छलफल केन्द्रकी उत्कृष्ट सहभागी पनि हुन्। पछिल्लो समय नेतृत्वका लागि उनले यही केन्द्रबाट महिला अधिकार र हिंसा तथा महिला नेतृत्वबारे



धेरै सिकेकी थिइन् ।

'उहाँ अरूभन्दा निकै जिज्ञासु हुनुहुन्थ्यो, मिहिनेती पनि,' कक्षाकी सहजकर्ता केशरी घर्ती (बुढाथोकी) ले भनिन्, 'अहिले सबैको उदाहरण बन्नुभएको छ ।'

टीका स्वयं पनि छलफल केन्द्रमा सहभागी हुनुअघि आफूलाई संरचना र नेतृत्वबारे केही थाहा नभएको स्वीकार गर्छिन् । छलफलक्रममा दुवै विषयको ज्ञान भएपछि त्यो स्थानमा महिला पनि पुग्नुपर्दो रहेछ भन्ने थाहा पाइन् । उनले यसअघि ०६१ देखि नै समूह र संघ-संस्थामा काम गर्न थालेकी हुन् । तिनमा काम गर्दा सफलताभन्दा अवरोध धेरै भोगेको उनको अनुभव छ ।

टीका सर्वसम्मत अध्यक्ष त भइन् तर यहाँसम्म आइपुग्दा उनले जीवनमा धेरै संघर्ष गरेकी छन् । धेरै अवरोध र अपहेलना सहेकी छन् । त्यसलाई चिर्न जिज्ञासु स्वभाव, लगनशीलता र अनुशासन सधैं उनको साथ रह्यो । यही स्वभावले समिति अध्यक्षका रूपमा जिम्मेवारीका अढाई वर्ष अवरोध र समस्यालाई चिर्न सफल भएको उनको ठहर छ ।

टीकाले महिला नेतृत्वको आवश्यकता र प्रभावकारिता पुष्टि गरिसकेकी छन्। उनको नेतृत्वले भेरीगंगा नगरपालिका-१२, तल्लो थानीचौरस्थित यो विद्यालयको कायापलट भएको छ। यसले समाज परिवर्तनमा एउटा ठूलै सन्देश छाडेको छ, 'जिज्ञासु र लगनशील भएपछि पुरुष मात्र होइन, महिला पनि अघि बढ्न सक्छन्।'

अहिले पनि उनले आफ्नो जिम्मेवारी वहन गर्ने क्रममा धेरै चुनौती सामना गरिरहेकी छन्। अधिकांश अवरोध र चुनौती लैंगिक विभेदसँग जोडिएका छन्।

'टीकाले कामै गर्न सक्दिन भन्नेहरू नभएका होइनन्, यस्तो भन्नेहरूको संख्या विस्तारै घट्दै गएको छ,' उनी भन्छिन्। महिला भएकैमा अवरोध सिर्जना गर्नेहरूलाई उनले मुखभरिको जबाफ होइन, नतिजामूलक काम गरेर आफ्नो खुबी देखाइदिएकी छन्। र, यही कारण हो, विद्यालय सँगसँगै टोल, समाज र परिवारमा उनको वाहवाही छ।

०४६ फागुन १० गते स्वीकृत भएको नेपाल राष्ट्रिय निम्नमाध्यमिक विद्यालयका प्रधानाध्यापक हरिबहादुर नेपाली टीकाको नेतृत्वमा आफ्नो जिम्मेवारी पूरा गरिरहेका छन्। 'उहाँ आएपछि विद्यालयमा धेरै पहिलेदेखि अड्किएका काम भएका छन्। मेरो कामको बोझ नै हल्का भएको छ,' उनी भन्छन्।

नेपालीका अनुसार विद्यालयका अधिकांश काम टीका आफैं गर्छिन्। सरोकारवाला निकायमा जाने, सिफारिस गराउनेलगायत काममा उनी आफैं खटिन्छिन्। समितिको निर्णय गर्ने जिम्मेवारी पनि उनकै हो।

'पुरुष अध्यक्ष हुँदा सबै काम तपाईं गर्नुहोस् भन्नुहुन्थ्यो, यस कारण मैले विद्यार्थीलाई समय दिन पाएको थिइनँ। महिला नेतृत्वमा आएपछि मेरो धेरै समय बचत भएको छ। त्यो समय विद्यार्थी र उनीहरूको शैक्षिक स्तर उकास्नमा खर्च गरिरहेको छु,' उनी भन्छन्।

महिला नेतृत्वको विशेषता केलाउँदै टीकाले 'विद्यालयप्रति आमचासो बढेको' बताइन्। 'महिला खटेर काममा लागेको देखियो, कामप्रति लगनशील भएको पनि पाइयो,' उनको भनाइ छ। यतिमात्र होइन, विद्यालयप्रति अभिभावकको चासो पनि बढेको उनको अनुभव छ। अभिभावक भेलामा अधिकांश महिला हुन्छन्। छात्रवृत्ति र परीक्षाफल सार्वजनिक गर्ने कार्यक्रममा समेत महिलाहरूको उपस्थिति बढी हुन थालेको छ।



‘हरेक घरपरिवारमा छोराछोरी बुबासँग भन्दा आमासँग बढी खुल्छन् । उनीहरूको भावना बुबाले भन्दा आमाले बुझ्ेकी हुन्छिन् । ती आमाले अचेल छोराछोरीको पढाइको स्तर र गतिविधिमा चासो दिन थालेका छन् । यो नै सबैभन्दा ठूलो उपलब्धि हो,’ प्रधानाध्यापक नेपालीले भने । उनका अनुसार यसले विद्यार्थीको पढाइको स्तर र समग्र विकासमा सकारात्मक सन्देश दिएको छ ।

‘के देख्नुहुन्छ त महिला नेतृत्वको कमजोरी ?’ भनेर सोध्दा उनको जबाफ छ, ‘घरायसी परिवेशमा धेरै समय बिताएकाले होला, अलि बढी बुझ्ाउनुपर्ने हुन्छ ।’

अध्यक्षका अन्तिम प्रतिस्पर्धी तथा सदस्य पठबहादुर पुन पनि महिला नेतृत्वसँग काम गर्न सहज हुने अनुभव सुनाउँछन् । ‘पुरुष-पुरुषबीच सधैं टकराव भइरहन्थ्यो, झ्गडा धेरै हुन्थ्यो । अहिले यो समस्या छैन,’ उनले भने ।

यस्तै अनुभव सुनाउँछिन्, विद्यालयकी शिक्षिका अम्बिका चपाई (थानी) ।

'सबैभन्दा सजिलो हामीलाई भएको छ। विद्यार्थी पनि शिक्षकसँग भन्दा शिक्षिकासँग बढी खुल्छन्,' उनले भनिन्, 'महिला नेतृत्व असफल हुन दिनुहुन्न भन्ने भावना बढेको छ।'

सबैभन्दा गहिरो कुरा उनले यसरी व्यक्ति गरिन्, 'विद्यालयको सबै हिसाबकिताब प्रस्ट छ। पहिला पुरुष हुँदा सानातिना खर्चको हिसाबकिताब नराख्ने र विवाद भइरहने हुन्थ्यो। त्यस्तो समस्या अहिले छैन। अहिले एक रूपैयाँको पनि हिसाबकिताब हुन्छ।'

टीकाको नेतृत्वमा विद्यालयले काँचुली नै फेरेको छ। धेरै यस्ता नीतिगत निर्णय भएका छन् जसबाट अभिभावकलाई विद्यालयप्रति अपनत्व महसुस भएको छ। भौतिक पूर्वाधार थपिएका छन्। सुविधाहरू त्यत्तिकै बढेका छन्।

टीका अध्यक्ष भएपछि ६-७ कक्षाका विद्यार्थीले कम्प्युटर चलाउन पाएका छन्। बिजुली जोडेको छैन भनेर अघिल्लो नेतृत्वले जिल्ला शिक्षा कार्यालयबाट उपलब्ध कम्प्युटरसमेत ल्याएको रहेनछ। किनेको छ महिनादेखि ती कम्प्युटर पसलमै थन्किएका थिए। टीका आफैंले कर्मचारीसँग गएर ती कम्प्युटर विद्यालय ल्याइन्।

त्यसपछि बिजुली जडानको निम्ति खर्च पुगेन। त्यसका लागि चाहिने पाँच हजार रूपैयाँ एकमुष्ट भएन। उनले व्यक्तिगत रूपमा २ हजार २ सय रूपैयाँ थपेर विद्यालयमा विद्युत जडान गरिन्। 'पैसा नभएरभन्दा इच्छाशक्ति नभएर अघिल्लो समितिले विद्युतसमेत जोडेको रहेनछ,' टीका भन्छिन्।

अहिले विद्यालयमा बत्ती छ। र, ६-७ कक्षाका विद्यार्थीले कम्प्युटर चलाउन पाइरहेका छन्। कतिपय विद्यार्थी पहिले चटाईमा बसेर पढ्थे। उनले २२ हजार रूपैयाँ जुटाएर १० वटा टेबुलकुर्सी बनाइन्। यसका लागि उनले स्कुलको २१ रोपनी जग्गालाई आर्थिक स्रोत जुटाउने माध्यम बनाइन्। यो जग्गामा बर्सेनि उम्रने घाँस बेचेर आएको पैसा पनि विद्यालयको विकासमा खर्च गर्न थालिन्। विद्यालयले आफ्नो प्रयोजनका लागि किनेर राखेका भाँडाकुँडा सार्वजनिक कार्यक्रममा भाडामा दिने निर्णय गरिन्। त्यसबाट आएको पैसा पनि भौतिक पूर्वाधारमै खर्च गर्ने व्यवस्था गरिन्।

पहिले विद्यालयको चौर साँघुरो थियो। अधिकांश जग्गामा आँपका रुख थिए। यसले विद्यार्थीलाई पढाइबाहेक खेलकुदलगायत अतिरिक्त क्रियाकलाप गर्न ठाउँको अभाव



थियो। विद्यालयका कार्यक्रमसमेत खुम्चिएर गर्नुपर्ने बाध्यता थियो। यही बाध्यता र समस्या समाधान गर्न उनले ती रुख काट्ने निर्णय गरिन्। ऐलानी जग्गामा भएका रुखसमेत काटिए। त्यसबाट आएका काठ बिक्री गरियो। वन कार्यालयले वर्षौंदेखि यसको अनुमति दिएको थिएन। टीका आफैं कार्यालय धाएर यो निर्णय गराइन्। एक लाख ६७ हजार रूपैयाँ खर्च गरेर स्कुलको चौर विस्तार गरिन्।

शौचालय नभएका कारण छात्राहरू रजस्वला भएका बेला विद्यालय नै आउँदनथे। अहिले टीकाले जिल्ला शिक्षा कार्यालय धाएर आफ्नै पहलमा आर्थिक स्रोत जुटाउँदै शौचालय बनाइन्। पानीको त्यत्तिकै अभाव थियो। अहिले निकै परबाट पाइप ओछ्याएर विद्यालयसम्म पानी ल्याइएको छ। यसमा एउटा गैरसरकारी संस्थाले सहयोग गरेको छ। विद्यालय प्रांगणमा सरस्वतीको मन्दिर पनि बनाइएको छ।

टीकाले नेतृत्व सम्हालेपछि विद्यालयमा यस्ता धेरै काम भएका छन्। यी काम गर्ने बेला धेरै बाधाअड्चन नआएका होइनन्। उनले ती सबै अड्चनलाई साहसपूर्वक चिरिन् र सफलतासाथ अघि बढिन्।

यति हुँदाहुदै टीका पुरुषको एउटा बानीबाट वाक्क भएको बताउँछिन्। 'अगाडि हुन्छ भन्दिने, काम गर्ने बेला पछि हट्ने र साथ नदिने,' उनले दुखेसो सुनाइन्।

यस्ता थुप्रै तीता अनुभव छन् उनका। अध्यक्ष भएपछि उनी बजेट माग्न सबभन्दा पहिला तत्कालीन छिन्चु गाविस (अहिले भेरीगंगा नगरपालिका) पुगिन्। सचिवले भने यस्तो जबाफ दिएछन्, 'बजेट आए पनि तपाईं के गर्न सक्नुहुन्छ ?'

'उहाँको कुरा सुनेर साह्रै चित्त दुख्यो,' टीकाले भनिन्, 'जसोतसो २५ हजार रूपैयाँ निकासा गराएँ।'

इलाका वन कार्यालय, छिन्चुका प्रमुखलाई भेट्दा पनि यस्तै नमीठो अनुभव संगालेकी छन् उनले। ऐलानी जग्गाका आँपका रुख काट्न पाऊँ भन्ने व्यहोराको निवेदन लिएर उनी कार्यालय प्रमुखको कार्यकक्षमा गएकी थिइन्। इलाका प्रमुखले परिचय नै नगरी एक्कासि टीकालाई भनेछन्, 'दुई दिनको पद पाएँ भन्दैमा यत्रो तिम्रो औकात! ऐलानी जग्गाको रुख काट्ने ?'

टीकाले पटक-पटक कागजपत्र हेर्न आग्रह गरिन्। टीकाका अनुसार प्रमुखले मन नलागी-नलागी हेरे। र, 'तपाईं जंगल फडानी गर्न पाउनुहुन्न' भनेर फिर्ता पठाइदिए।

टीका तैपनि पछि हटिनन्।

'के कारणले स्वीकृत हुँदैन, सल्लाह चाहियो,' उनले भनिन्।

त्यसपछि उनले फेरि फाइल अघि सारिन्। त्यतिञ्जेल झन्डै आधा घन्टा भइसकेको थियो। यस अवधिमा ती प्रमुखले आफ्नो कोठाभित्र आएका आगन्तुकलाई कुर्सीमा बस्नसमेत लगाएनन्। टीकाले फाइल उनकै टेबुलमा राखेर आफू कार्यालयबाहिर बसिन्। र, त्यहीँबाट विद्यालयका प्रधानाध्यापकलाई फोन गरिन्।

प्रधानाध्यापक आएपछि प्रमुखको व्यवहारमा एकाएक परिवर्तन आयो। ती कार्यालय प्रमुख नम्र भएर बोल्न थाले। भने, 'छ महिनापछि आउनू।' कार्यालयले तत्काल केही उपाय नसुझाएपछि विद्यालयको व्यवस्थापन समितिको निर्णयबाट सबै रुख काटिए। 'मैले मनमनै सोचेँ, मेरो काम बिगार्ने उद्देश्यले म कार्यालय पुग्नुअघि नै त्यतिबेला कसैले

वनको प्रमुखलाई खबर गरेको रहेछ,' टीकाले भनिन्, 'पछि त्यो व्यक्ति पनि पत्ता लाग्यो ।'

टीका तीनवर्षे कार्यकालका लागि समितिको अध्यक्षमा चुनिएकी हुन् । ०७२ असोजमा उनको कार्यकाल सकिँदैछ । 'अब मेरो कार्यकाल धेरै दिन बाँकी छैन । जिम्मेवारी पूरा गर्ने क्रममा मलाई असहयोगभन्दा सहयोग गर्नेहरू नै धेरै भए,' टीकाले भनिन्, 'असहयोग गर्नेले भने धेरै दुःख दिए ।'

एक सामान्य गरिब परिवारमा जन्मिएकी टीका अहिले जस्तोसुकै चुनौती सामना गर्न तयार भएकी छन् । यसको प्रमुख श्रेय उनी आफ्ना श्रीमानलाई दिन्छिन् । नेपाली सेनाको प्राविधिकका रूपमा कार्यरत श्रीमानको प्रेरणा, सुझाव र सल्लाहलाई आफ्नो सफलताको मूलमत्र मान्छिन् उनी ।

घर र माइतमा ठूलो संघर्ष गरेर एसएलसीसम्मको पढाइ पूरा गरेकी छन् उनले । फुपूको छोरा (दाइ) को जोडबलमा उनले आफूभन्दा अघिल्ला दिदीहरूलाई पढाइमा उछिनेकी हुन् । होइन भने आर्थिक अभावका कारण बुबाआमा उनलाई पनि ५-६ कक्षाभन्दा बढी पढाउने सोचमा थिएनन् ।

टीकाले ०५७ मा १० कक्षा पढ्दापढ्दै प्रेमविवाह गरेकी हुन् । विवाहपछि उनले आफ्नो पढाइलाई नियमितता दिन पाइनन् । परिवारको माइलो छोरासँग विवाह गरेपछि उनलाई तत्काल गृहस्थीले च्याप्यो । घरमा सासू, देवर र श्रीमानमात्र थिए । टीकाले १० कक्षा पढ्दापढ्दै विवाह गरे पनि उनकी देवरानी भने एसएलसी पास गरेको भोलिपल्ट घर गर्न आएकी थिइन् ।

'मैले त घर आएर पढन पाइनँ, यिनलाई चाहिँ पढाउँछु भन्ने सोच आयो,' देवरानीलाई बिहे गरेर आएको दुई साताभित्र पढ्न पठाएकी टीकाले भनिन्, 'म घरका सबै काम गर्छु, तिमी प्लस टु पढ्न जाऊ भनेँ, उनी गइन् । अहिले सुर्खेतमा कोठा भाडा लिएर पढ्छिन् र त्यहीँको शिशु स्याहार केन्द्रमा पढाउँछिन् ।'

उनले देवरानीबाट एउटै आशा राखेकी थिइन्- अहिले उनलाई सहयोग गरे भोलि परिआउँदा सहयोग पाइएला । तर, ठिक उल्टो भयो ।

अहिले देवर छुट्टिसकेका छन् । आमा पनि उनैसँग बस्छिन् । त्यतिबेलासम्म उनको पढ्ने

इच्छामा तुषारापात भइसकेको थियो। पहिलो सन्तान जन्मिसकेको थियो। सन्तान हुर्काउन पनि घर छाड्न मिलेन उनले। उता श्रीमानले ०६० मा जागिर सुरु गरिसकेका थिए। उनले घरगृहस्थी सम्हाल्नुपर्ने थियो। दोस्रो बच्चा ०६२ मा जन्मियो, जसलाई हुर्काउँदा हुर्काउँदै पाँच वर्ष बित्यो।

त्यसपछि भने पढाइको चाहना पूरा गर्ने बाटोमा अघि बढिन् टीका।

०६७ मा छिन्चुको शारदा उच्च माविमा भर्ना भइन्। पहिलो वर्ष नेपाली विषय लाग्यो। पूरक परीक्षामा एसएलसी उत्तीर्ण गरिन्। 'म अझै पढ्न चाहन्छु,' उनी भन्छिन्, 'श्रीमानले मलाई अझै पढ्नुपर्छ भनिरहनुभएको छ।'

टीका अध्यक्ष त हुन् नै, उनले घरगृहस्थी पनि सम्हाल्नुपर्छ। दुई छोराको रेखदेख जिम्मा उनकै काँधमा छ। खर्च जोहो गर्न कुखुरा र खसी पालेकी छन्। जग्गा-जमिनमा आठ रोपनी सगोलमा छ भने तीन रोपनी नामसारी हुन लागेको छ।

उनका अनुसार पहिले महिला बाहिर काममा निस्किँदा अनैतिक कार्य हुनसक्छ भन्ने सोच थियो। महिला सदस्यलाई आफ्नो गाउँबाहिर काम गर्न त झनै गाह्रो थियो। उनलाई भने माटो परीक्षण गर्न गाउँगाउँ डुल्नुपर्ने र बीउ लगाउने तरिका सिकाउनुपर्ने हुन्थ्यो। पुरुष सदस्यहरू यी काममा नजाने।

'हामी जसोतसो घरकालाई मनाएर काममा गइरहेका थियौं। हाम्रा एक सहकर्मी सदस्यको घरमा त बाहिर डुलेको निहुँमा कलह नै भयो। श्रीमान र श्रीमतीबीच कुटाकुट भएर गर्भमा रहेको बच्चा खेर गयो,' टीकाले तीतो अनुभव बाँडिन्, 'यो घटनापछि म पनि समूह छाड्न बाध्य भएँ।'

उक्त संस्था छाडे पनि समाजमा थप क्रियाशील हुने हुटहुटी भने रोकिएन।

सुर्खेतकै लेकप्राजुल गाविस-८ मा माइत भएकी टीका सामान्य गरिब कृषक परिवारकी आठमध्ये पाँचौं सन्तान हुन्। उनको बाल्यकाल त्यति सहज थिएन। उनीभन्दा जेठी दिदीहरू सबैले ५-६ कक्षासम्म मात्र पढ्ने मौका पाए। उनको पालादेखि मात्र पढाइ अलि माथि उक्लिएको हो। अरू सन्तानलाई बाबुआमाले बाख्रा र भैंसी बेचेर पढाए। सायद त्यसैले, जेठा भाइ स्नातकोत्तर गरेर सरकारी सेवामा छन्। कान्छो बिएड पूरा गरेर भारतीय सेनामा छन्। बहिनी पनि बिएड गरेर नेपाली सेनामा जागिरे छिन्।

हीरा घर्ती

भेरीगंगा नगरपालिका- १२, भिलमिले टोल



# मेलमिलापकी गुरु 'हीरा'

पुरुषको कारबाही प्रक्रियाभन्दा महिलाको सम्झाउने प्रक्रिया बढी प्रभावकारी देखिएको छ समुदायमा । हीराले नेतृत्व लिएदेखि गाउँमा धेरै विवाद सुल्झिएका छन् ।

‘तपाईं पनि अर्को श्रीमानसँग गए भइगयो नि !’

बहुविवाहको उजुरी लिएर प्रहरीकहाँ पुगेकी महिलालाई छिन्चु प्रहरी प्रमुखले यस्तो सल्लाह दिएको सुनेर हीरालाई झनक्क रिस उठ्यो । उनले ती प्रहरीलाई बेस्सरी हपारिन् । केहीबेर भनाभन नै चल्यो । प्रहरीलाई फेरि यस्तो शब्द नदोहोऱ्याउने कबोल गराइन् र फर्किइन् । ‘एउटी महिलालाई लिएर बहुविवाहको उजुरी गर्न प्रहरीकहाँ गएकी थिएँ,’ उनले सुनाइन्, ‘ती प्रमुखको भनाइले निकै चोट पऱ्यो, निकै बेर भनाभन पनि भयो ।’

हीरा अर्थात् ३४ वर्षीया हीरा घर्ती । एकल महिला । भेरीगङ्गा नगरपालिका-१२, झिलमिले टोलमा छ उनको घर । बाँके, कोहलपुरबाट सुर्खेत छिन्चु पुग्नुअघि राजमार्गबाट करिब डेढ किलोमिटरभित्र पर्छ उनको घर ।

सबैकी हाईहाई यी महिला गाउँमा ‘मेलमिलाप गुरु’ भनेर चिनिन्छिन् ।

टोल, छिमेक, गाउँघर, पूरै नगरपालिकामा कसैको घरमा महिला हिंसाका घटना भए त्यसको खबर पहिले यिनकै घरमा पुग्छ । सासू-बुहारी झगडा गरे वा श्रीमान-श्रीमती कुटाकुट गरे, खबर हीराका कानमा परिहाल्छ । उनी घरको काम छाडेर त्यतै दर्गुछिन् । सबै पक्षको कुरा सुन्छिन् र झगडा मिलाइदिन्छन् ।

२०५३ सालमा आफूलाई पढाउने शिक्षकसँग मागीविवाह गरेकी थिइन् हीराले । श्रीमान बिरामी परे । जति उपचार गर्दा पनि निको भएन, ०६३ सालमा परलोक भए । यस घटनाले उनी मर्माहत भइन् । ‘अनुशासनलाई मूलमन्त्र मानेर आत्मविश्वाससाथ अघि बढ्ने अठोट गरेकी छु’, उनी भन्छिन्, ‘कसैले केही प्याच्च भन्यो भने धेरै चित्त दुख्छ ।’

पछिल्ला दिन उनले आफ्नो सामाजिक कार्यलाई अझ प्रभावकारी किसिमले अघि बढाइरहेकी छन् । यो पंक्तिकार ०७१ फागुन २३ गते बिहान घर्तीको घर पुग्दा उनलाई यस्तै झगडा मिलाइदिन आग्रह गर्दै छिन्चु इलाका प्रहरी कार्यालयबाट तारन्तार फोन आइरहेको थियो । त्यतिबेला पनि भेरीगंगा नगरपालिका-१२ कै एउटा घरपरिवारमा भएको विवाद मिलाउन जान उनलाई हतार थियो ।

‘बुहारीले सासूलाई बोक्सी भनेपछि सासू पक्षका मान्छे प्रहरी कार्यालय पुगेका छन् रे ! बोला’बोलायै छन्,’ उनले मोबाइलमा कुरा गरिसकेपछि पङ्क्तिकारसँग भनिन्, ‘मलाई छिटो त्यहाँ पुग्नुपर्ने भयो ।’



मोबाइलमा कुरा सकेर उनले आँगनमा उभिएका एक पुरुषलाई अह्राइन्, 'तपाईं प्रहरी कार्यालय पुग्दै गर्नुस्, म आउँछु। झगडा जसरी पनि मिलाउनुपर्छ।'

घर्तीका अनुसार २०७१ सालको संविधानसभा चुनावपछि १२ नम्बर वडाकै एउटा परिवारमा श्रीमान र श्रीमतीबीच कुटाकुटै भएछ। कुटाकुटको कारण पारिवारिक विवाद नभई राजनीतिक थियो। श्रीमान एमाले समर्थक, श्रीमती कांग्रेस। श्रीमानले श्रीमतीलाई कांग्रेसले रक्सी बाँडेर चुनाव जित्यो भनेछन्। श्रीमतीले कतिबेला बाँडेको देखिस् भनेपछि भनाभन भएछ। पछि हात हालाहालसम्म भएछ। यही झगडाले श्रीमती १५/२० दिन माइत बसिन्। 'श्रीमतीलाई माइतबाट बोलाएर मिलापत्र गराइयो,' घर्तीले अनुभव सुनाउँदै भनिन्, 'उनीहरू सक्रिय कार्यकर्ता पनि होइनन्, सामान्य समर्थक हुन् तैपनि विवाद त्यहाँसम्म पुगेछ।'

एकपटक आफ्नै परिवारभित्र पनि एउटा विवाद छिनोफानो गर्नुपऱ्यो हीरालाई। उनका अनुसार जेठाजुचाहिँ धेरै पहिलादेखि श्रीमती कुट्दारहेछन्। सुरुसुरुमा हीरालाई कहिलेकाहीँको झगडा होला, आफैँ मिलाउन् भन्ने लाग्यो। चासो दिइनन्। 'एक दिन

त रगताम्य हुनेगरी हान्नुभएछ, जेठानी दिदी सुन्निएको मुख लिएर आउनुभयो,' हीराले भनिन्, 'कुटाइ खाएपछि दिदी तीन दिनसम्म घरको छतमै सुत्नुभएछ। घाउको पीडा अति बढेपछि मकहाँ आउनुभएको थियो।'

हीराकै नेतृत्वमा टोलछिमेक राखेर यो जोडीको मिलापत्र त भयो तर एक वर्षसम्म दुईजनाबीच बोलचाल नै भएन। 'अहिले बोलचाल छ, कुट्न पनि छाड्नुभएको छ,' उनले सुनाइन्।

हीराले तीन वर्षसम्म स्थानीय छलफल केन्द्रको सहजकर्ताका रूपमा काम गरिन्। यही अनुभवले उनमा टोल, छिमेक, गाउँघरमा केही झगडा हुनेबित्तिकै अघि सर्ने बानी पर्‍यो। अहिले त उनीकहाँ हरेक झगडाको सूचना सुरुमै आइपुग्छ। उनकै नेतृत्वमा थप दुईजना सहजकर्ता पनि तयार भए। केन्द्रका सहभागीमार्फ टोलछिमेक र वरपरका घरपरिवारमा भएका घटनाबारे छलफल हुन्छ। महिला अधिकार र हिंसासँग जोडिएका जुनसुकै घटना र मुद्दा समाधानमा केन्द्रका अध्यक्ष, सहजकर्ता र सहभागी जुटिहाल्छन्।

हीरासँग सहजकर्ताको मात्र अनुभव छैन। उनले स्थानीय दर्जनौं संरचनामा नेतृत्व र प्रतिनिधित्व गरेकी छन्। त्यसमध्येको एउटा हो- गौरीशंकर सामुदायिक वन। उनी यसमा कार्यसमिति सचिव छिन्। यसअघि उनी महिलामात्र सहभागी सिर्जना सामुदायिक वनमा थिइन्। त्यसमा कार्यसमिति अध्यक्षदेखि सबै पदमा महिला थिए। 'यी दुई वन गाभिँदा महिलालाई अध्यक्ष दिनुपर्छ भनेर कति माग गर्‍यौँ तर दिइएन,' हीराले भनिन्। जबकि गौरीशंकरमा गाभिनुअघि सिर्जना सामुदायिक वन सुर्खेतका ३० वटा उत्कृष्ट वनमध्ये १ नम्बरमा परेको थियो। त्यसबापत साढे २ लाख रूपैयाँ पुरस्कारसमेत पाएको थियो। त्यो रकम पनि गौरीशंकरकै खातामा जम्मा भएको छ।

उनी सचिव भएपछि त्यहाँका महिला उपभोक्ताले धेरै राहत पाएका छन्। चाडबाडका समयमा घाँस काट्न पाएका छन्। 'यहाँ बसेर महिलाको सुविधाकेन्द्रित निर्णय गरिरहेकी छु,' हीराले भनिन्।

सामुदायिक वनका उपभोक्ता दुलेल टोलका ६७ वर्षीय नौलसिङ वली कार्यसमितिमा सबै पुरुष हुँदा उनीहरू राजनीति मात्र गरेर बस्ने गरेको अनुभव सुनाउँछन्।



'महिला पनि आएपछि अहिले दलगत राजनीत बन्द भएको छ। वन संरक्षण र व्यवस्थापनका काम हुन थालेका छन्,' उनले अनुभव सुनाए।

अर्का उपभोक्ता झकबहादुर घर्ती भन्छन्, 'हीराको काम गर्ने तरिका निकै राम्रो छ। पुग्नुपर्ने ठाउँमा पुगेकी छन्। महिलालाई केन्द्रित गरेर नियम बनाएकी छन्। सबैलाई सजिलो भएको छ।'

सामुदायिक वन कार्यसमिति सदस्य मनबहादुर पुन पनि छलफल केन्द्रले यहाँका महिलालाई जागरुक र शिक्षित बनाएको अनुभव सुनाउँछन्। 'अहिले त अधिकार माग्छन्, पद माग्छन्। पुरुषले भन्दा चर्को स्वरमा भाषण गर्छन्,' उनले भने, 'पुरुषको कारबाही प्रक्रियाभन्दा महिलाको सम्झाउने प्रक्रिया बढी प्रभावकारी भएको देखेको छु। हीराले नेतृत्व लिएदेखि यस्ता विवाद धेरै सुल्झिएका छन्।'

पुनले महिला उपस्थितिबिना वन संरक्षण हुन नसक्ने अनुभव सुनाए किनकि वनलाई पुरुषको तुलनामा बढी माया गर्छन् महिलाले। कार्यसमितिमा महिला हुँदा पैसा पनि कम

खर्च हुने गरेको छ। 'वन कर्मचारीलाई पुरुष पदाधिकारीले खाजा खुवाउन लगे भने धेरै खर्च गर्छन्, उनीहरूको नास्तापानीमा मदिरा पनि हुन्छ। महिलाले खुवाउँदा हुँदैन। कम खर्च गरे समूहको खातामा बचत बढी हुन्छ,' पुनले कार्यसमितिमा महिला उपस्थितिको फाइदा दर्साइन्।

उनका अनुसार कार्यसमितिमा हीरा आएदेखि हिसाबकिताब तलमाथि हुन पाएको छैन। सानातिना खर्च पनि दुरुस्त लेखेर राखिन्छ। सबै पारदर्शी र स्पष्ट छन्।

उपहार सामाजिक उद्यमी महिला सहकारी संस्था लिमिटेड, छिन्चुकी अध्यक्ष पनि हुन् हीरा। उनकै नेतृत्वमा करिब ११ लाख रूपैयाँको 'मूल्य शृंखला' नामक कार्यक्रममार्फत अनुदानमा खसीबोका पाल्न दिएको छ सहकारीले। यसको उद्देश्य महिलालाई व्यावसायिक बनाउनु हो। यसबाट २६ जना महिला लाभान्वित छन्।

'छिन्चुमा पहिलोपटक यो कार्यक्रम आएको हो', सहकारीकी व्यवस्थापक पार्वती वलीले भनिन्, 'हीराजीकै पहलमा उच्च मूल्य कृषि वस्तु विकास आयोजना पनि संस्थाले पाएको छ।'

हीराले हरेक समूहको बैठकमा उपस्थित भएर महिलालाई बचत गर्न हौसला दिने गरेको उनले सुनाइन्।

सहकारीकी लेखा संयोजक हरिकला बस्नेत (सिंह) को अनुभवमा हीराले सहकारी संस्थाका कर्मचारी र समूहका महिलालाई नेतृत्व विकासमा पनि सघाइरहेकी छन्। 'नेतृत्व लिन र दिनसक्ने क्षमताको विकास गर्न सबै महिला दिदीबहिनीलाई हौसला दिइहरनुहुन्छ,' उनले हीराको कार्यशैलीबारे भनिन्।

त्यसो त हीराले आफ्नो नेतृत्व विकासका लागि शिक्षामा पनि जोड नदिएकी होइनन्। उनले अघिल्लो वर्षमात्र एसएलसी परीक्षा दिइन् तर गणित विषयमा अनुत्तीर्ण भएपछि उनको यो धोको अधुरै छ।

उनी ०५४ देखि कुनै न कुनै रूपमा सामाजिक संघसंस्था र तिनका गतिविधिमा संलग्न हुन थालेकी हुन्। दिगो विकास कोषकी स्थानीय स्वयंसेवक, साथी संस्थाकी पारा काउन्सिलर, महिला अधिकार मञ्च सञ्जालकी सचिव पनि हुन् उनी। हीराले मेलमिलाप

केन्द्रमा पनि काम गरिन् । रेडक्रस सोसाइटीको युवा र महिला समूहको सचिव भएर पनि सेवा दिइसकेकी छन् । उनले पशुपालन, परामर्श, महिला नेतृत्व र नेतृत्व विकास, भिडियो डकुमेन्ट्रीलगायत थुप्रै तालिम लिएकी छन् । उनले नेपाल वातावरण पत्रकार समूहबाट महिला आवाज कार्यक्रमअन्तर्गत भिडियो वृत्तचित्र तालिम दिएकी छिन् । उनले वृत्तचित्र पनि बनाएकी छन् ।

'काखमा बच्चा च्यापेर ०५४ सालदेखि सामाजिक काममा हिँड्न थालेकी हुँ । केटाकेटी हुर्किएर विवाह भइसक्यो तर मेरो यात्रा जारी छ,' उनले ०७१ फागुन २३ गते आफ्नो घरको आँगनमा पंक्तिकारसँग भनिन् ।

हीराले भनेझैं उनकी जेठी छोरीको एसएलसीपछि विवाह भइसकेको छ । जेठो छोरो ९ र कान्छी छोरी ८ मा पढिरहेका छन् ।

हीराको अभियान रोकिएको छैन ।

**कमला शाही**

२२ बर्ष, लेख पराजुल गाबिस ६ शनिमोर



# घरबाटै सुशासन अभियान

आफ्नै श्रीमान्ले समेत वनको रकम खाएको थाहा पाएपछि पनि सार्वजनिक सम्पत्ति हिनामिना रोक्ने अभियान छाडिनन् कमलाले

लेखपराजुल गाविसमा रहेको श्री सरस्वती सामुदायिक वनको आम्दानी हिनामिना भइरहेको चर्चा गाउँभरि फैलियो। विस्तृत जानकारी भने कसैले बाहिर ल्याउन सकेको थिएन।

सार्वजनिक सम्पत्ति व्यक्तिले आफूखुसी चलाउनु अपराध हो भन्ने बुझ्ेका गाउँमा प्रसस्त थिए। तर वनको आम्दानी कसले, किन र कसरी हिनामिना गरिरहेको छ ? सार्वजनिक सम्पत्ति कसले चलाइरहेको छ भन्ने गुपचुप नै थियो। कसैले खोजीनिती गरेको थिएन।

भर्खरै महिलाको छलफल केन्द्र सञ्चालनमा आएको थियो गाउँमा। 'सिर्जनशील सामुदायिक छलफल केन्द्र' मा महिला भेला भएर आफ्ना अधिकार, आफूमाथि भइरहेका हिंसा, स्थानीय संरचना, नेतृत्वलगायत विषयमा छलफल गर्थे। समस्या समाधानका उपाय पहिल्याउँथे।

यही क्रममा वनको आम्दानी हिनामिना भएको खबर छलफल केन्द्रमा ठूलो मुद्दाका रूपमा उठ्यो। केन्द्रमा सहभागी महिला पुरुषले गरेका बदमासी सच्याउनुपर्छ भन्न थाले। उनीहरूले यो कुरा घरमा गएर आफ्ना श्रीमानसमक्ष पनि राखे।

श्रीमानका प्रतिक्रिया सुनेर ती महिलाले थाहा पाए, सार्वजनिक आम्दानी आफूखुसी चलाउनेमा आफ्नै श्रीमान पनि रहेछन्। पुरुषहरूले यो विषय नउठाउन आफ्ना श्रीमतीलाई धम्की दिए। 'घरको कुरा केन्द्र लगेर गर्ने होइन, यस्तो कुरा गऱ्यौ भने म केन्द्रमा जान दिन्न' सम्म भनेछन्।

त्यसपछि केन्द्रमा बिस्तारै यो मुद्दाबारे छलफल कम हुँदै गयो।

हिनामिना भएको रकम उठाउने साहस कसैले गर्न सकेन। यत्तिकैमा केन्द्रकी सहजकर्ता कमला शाहीले भनिन्, 'थाहा पाइपाई आफ्नै परिवारका सदस्यलाई यस्तो अपराध गर्न दिनुहुँदैन। सच्याउनुपर्छ। म यसको नेतृत्व लिन्छु। तपाईंहरू साथ दिनुहोस्।'

त्यतिबेलासम्म कमला शाहीलाई आफ्ना श्रीमानले पनि वनको पैसा चलाएका छन् भन्ने थाहा थिएन। कमलाले नेतृत्व लिने भनेपछि अरू महिलाले 'तिम्रा श्रीमानले पनि पैसा चलाएका छन्' भनेर सुनाए। कमलाले घर पुगेर श्रीमान भुपेन्द्र शाहीलाई सोधिन्। भुपेन्द्रले १५ हजार रूपैयाँ चलाएको स्वीकार गरे। यो थाहा पाउँदापाउँदै पनि हिनामिना भएको रकम उठाउनुपर्छ भनेर उनी अघि बढिन्।



‘रकम हिनामिनाबारे मैले घरमा श्रीमानसँग कुरा गरेपछि मात्र थाहा पाएँ, उहाँले पनि त्यो रकम चलाउनुभएको रहेछ,’ शाहीले भनिन्। उनीमाथि झन् ठूलो चुनौती आइलागेको थियो। विवाह गरेर आएको एक वर्ष पनि पुगेको थिएन। कमलाले घरपरिवार त राम्ररी बुझ्न पाएकी थिइनन्, टोल, समाज बुझ्ने मौका कहाँबाट पाउनु ? उनका लागि यो ठाउँ र समाज पूरै नयाँ थियो। त्यसमा पनि बुहारी।

तैपनि उनी पछि हटिनन्, सार्वजनिक सम्पत्ति हिनामिना घटनाको नेतृत्व लिने प्रतिबद्धता कायमै राखिन्।

कमलाका श्रीमानले उनलाई ‘मैले लिएको पैसा तिर्छु, तिमीले किन यसको नेतृत्व गर्नुपर्‍यो ?’ भनी त्यो मुद्दा त्यहीँ छाड्न आग्रह गरे तर उनले मानिनन्। ‘तपाईंबाट पैसा असुल गरेर हुँदैन, सबैबाट उठाउनुपर्छ’ भनेर नेतृत्व लिइन्।

कमलाकी ६० वर्षीय सासू कौशिला शाही पनि यसअघि यही वनकी कार्यसमिति सदस्य थिइन्। कमलाले सासूसँग सल्लाह गरेर रकम उठाउने निधो गरिन्।

वनको स्तर दिनप्रतिदिन खस्किँदै गएकाले त्यसको विकल्प पनि थिएन । व्यापक फँडानी भइरहेको थियो । गाईवस्तु मनलागी चराइन्थ्यो । 'काँचो दाउरा काट्ने र ढाल्ने नगर' भनेर सम्झाउँदा पनि कसैले नमान्ने अवस्था थियो ।

'वन पुरुषलाई भन्दा महिलालाई चाहिने हो, घाँसपात संकलन र काठदाउरा लिन महिला नै जानुपर्छ । खर काट्न महिला नै जानुपर्छ,' उनले यिनै कुरा सम्झाएर अन्य महिलालाई पनि आन्दोलनमा हिँड्न सहमत गराइन् ।

श्रीमानले मिति नै तोकेर दिन्छु भनिसकेका थिए । यतिले मात्र कमलाको चित्त बुझेन । टोल र समाजलाई आर्थिक पारदर्शिताको पाठ सिकाउने लक्ष्य राखिन् र सातपटकसम्म चिठी काटेर वडा भेला डाकिन् ।

'कहिले उपभोक्ता नआउने, कहिले पदाधिकारी नै नआउने अवस्था भयो,' उनले भनिन् । त्यसपछि कमला वन उपभोक्ता समितिका अध्यक्ष प्रेम नेपालीलाई भेट्न गइन् । नेपालीले उनलाई 'तैँले भनेर हुन्छ र ? मेरो काममा तैँले किन चिठी काटिस् ?' भनेर गाली गरे । तैपनि कमला गलिनन् । आफूले नजानेको र नबुझेको काममा जोकसैसँग माफी माग्दा पनि केही हुँदैन भन्ने सोचिन् । उनले नेपालीसँग भनिन्, 'माफ गर्नुहोस्, मैले जानिन गल्ती भो ।' यतिभन्दा पनि अध्यक्ष भेलामा आएनन् ।

यसबीच कमलालाई स्थानीय पुरुषले खुबै गाली गरे । 'बाटो हिँड्दा पनि तँलाई खुब नेता बन्ने रहर छ होइन ? पैसा खाउँला भनेर नेता बनेकी होली भने', उनले आफ्नो अनुभव सुनाइन्, 'तर म कहिल्यै रिसाइनँ । मेरो उद्देश्य र लक्ष्य सफा थियो । म कसैलाई फसाउन अघि बढेकी थिइन् । हो, म हजुरहरूको नेता हुँ भन्छु ।'

यति हुँदाहुँदै पनि कमला आफ्नो लक्ष्यमा अघि बढिरहेकी थिइन् । उनले फेरि पनि १४ जना महिलाको नेतृत्व गरेर घरदैलो कार्यक्रम गरिन् । प्रत्येक घरमा गएर वडा भेलामा आउने प्रतिबद्धताका लागि हस्ताक्षरसमेत गराइन् । नआउनेले एक सय रूपैयाँ जरिवाना तिर्नुपर्ने चेतावनी पनि दिइन् ।

'यति गरेपछि बल्ल ४० जना आए,' उनले भनिन् । भेलाले हिनामिना भएको रकम पत्ता लगायो । ६७ हजार ४ सय १० रूपैयाँ हिनामिना भएको हिसाब निस्कियो । भेलाले



ब्याजसहित गरेर एक लाख सात सय रूपैयाँ उठाउने निर्णय गऱ्यो । वन समितिका अध्यक्ष नेपालीले ३२,४१०, कमलाका श्रीमान भुपेन्द्रले १५ हजार, समितिका कोषाध्यक्ष वीरे बुढाले ८ हजार, उपभोक्ता माया गुरुङले १० हजार र समितिका सचिव करसिंह राउतले २ हजार रूपैयाँ बिनाब्याज भोगचनल गरेको भेलाले सार्वजनिक गऱ्यो ।

यसमध्ये कमला नेतृत्वको टोली सबैभन्दा पहिले अध्यक्ष नेपालीसँग पैसा माग्न गयो । अध्यक्षले दुई महिनाको भाका लिएको कमलाले बताइन् । माया गुरुङले आफ्नो पैसा समितिको कोषमा फिर्ता गरिसकेकी छन् । वीरे बुढाले आफूले लगेको मध्ये ५ हजार ५ सय रूपैयाँ फर्काइसकेका छन् । सचिव करिसिंहले पनि दुई हजार रूपैयाँ फिर्ता गरिसकेका छन् । कमलाका श्रीमान भुपेन्द्रले पनि फागुन १ पैसा फिर्ता गरे ।

'पैसा नउठे अख्तियारसम्म जाने निर्णय गरेका छौँ,' कमलाले भनिन् । भेलाले सामुदायिक वनको नयाँ कार्यसमिति बनाउने निर्णय पनि गरेको छ भने उपभोक्ताको नयाँ परिचयपत्र बनाउने तयारी भइरहेको छ ।

'पुराना पदाधिकारीले अहिले पनि हाम्रो निर्णयको विरोध गरिरहेका छन् तर हामीले यो

काम पनि गर्छौं,' कमलाले भनिन् ।

सामुदायिक वन कार्यसमितिकी सदस्य जसमती गुरुङले पैसा उठेपछि महिलाको नेतृत्वमा कार्यसमिति बनाउनेबारे केन्द्रमा छलफल भइरहेको बताइन् । 'नेतृत्वमा महिला बस्यो भने यस्ता घटना दोहोरिँदैनन् भन्ने लागेको छ,' छलफल केन्द्रकी सहभागीसमेत रहेकी जसमतीले भनिन् ।

उपभोक्ता माया गुरुङले कमलाले घरमै गएर राम्ररी सम्झाएकाले उनको कुरामा सहमत भएर वनको पैसा फिर्ता गरेको बताइन् ।

कमलाको अभियानमा सासू कौशिला र श्रीमान भुपेन्द्रले पनि साथ दिएका छन् । सासू पहिलेदेखि नै सामाजिक कार्यमा संलग्न भएकाले आफू यो अभियानमा सफल भएको कमलाले बताइन् ।

'गलत काम सच्याउनुपर्छ भनेर मैले नै बुहारीको हौसला बढाएकी हुँ', सासू कौशिलाले भनिन् । पढेकी बुहारी भित्र्याएपछि उसको नेतृत्व र क्षमता विकासमा सहयोग गर्नुपर्ने बताउँछिन् कौशिला । 'हाम्रो जमानाजस्तो छैन अहिले । पढेकी बुहारी ल्याएपछि आकाश-जमिनको फरक भएको छ,' उनले थपिन् ।

श्रीमान भुपेन्द्रले पनि कमलालाई मार्गदर्शन गरिरहेका छन् । एक वर्षअघि मात्र विवाह गरेकी कमलाको एउटा छोरो छ । वीरेन्द्रनगर नगरपालिका-८, भानुचोकमा जन्मिएकी कमला साइँली सन्तान हुन् । बुबाले दुई विवाह गरेका थिए । कमला जेठी आमाकी सन्तान हुन् । किसान बाबुले आफूहरूलाई जग्गा बेचेर पढाएको उनी सुनाउँछिन् ।

धनमाया बुढा

३६ बर्ष, गुमी गाविस-६, माथिल्लो भर्लेनी



# सफल महिला
# नेतृत्वकी मानक

आफू संलग्न दर्जनौँ संस्थाका बैठक, अन्तर्क्रिया र छलफलमा भाग लिन र विकास-निर्माणका प्रस्ताव लैजान धनमायालाई भ्याइनभ्याइ हुन्छ

त्यसो त उनी औपचारिक शिक्षाका नाममा ४ कक्षाभन्दा माथि उक्लेकी छैनन् तर स्थानीय तहमा कुनै समिति बनाउनुपर्‍यो भने सबैले उनकै नाम लिन्छन्। छलफल कक्षा, तालिम, अन्तर्क्रिया र अनुभवले आफूलाई उनले यसरी खारेकी छिन् कि महिलाले नेतृत्व पाए भने पुरुषले भन्दा राम्ररी स्थानीय संरचना हाँक्न सक्छन् भन्ने मानक नै बनेकी छन् धनमाया बुढा।

गुमी गाविस-६, माथिल्लो भर्लेनीकी सामाजिक नेत्री धनमायाको दिनचर्या मात्र फेरिएको छैन, समाज र परिवारको सोचमै परिवर्तन ल्याएकी सफल भएकी छन् उनी। 'कतै हिँड्न थाल्यो भने जहिल्यै श्रीमान रिसाउनुहुन्थ्यो, जा उतै बस्, कहिल्यै नआइज भन्नुहुन्थ्यो,' ३६ वर्षीय धनमाया बुढा सुरुसुरुका दिन सम्झिन्छन्, 'अहिले त बाटोका लागि खाजासमेत ठिक्क पारिदिनुहुन्छ, मोबाइल नछुटाउन सम्झाउनुहुन्छ।'

सुरुसुरुमा त श्रीमानलाई बुझाउनै कठिन भयो उनलाई। 'अरू कोही हिँड्दैनन्, तँ मात्र बाहिर किन हिँडिरहन्छेस् भन्नुहुन्थ्यो,' पछिल्ला दिनको अनुभव धनमायाले यसरी सुनाइन्, 'तर अहिले धेरै फेरिनुभयो, मैले केही भनिरहनुपर्दैन, आफैँ बुझ्नुहुन्छ।' उनका श्रीमान खेतीपातीको समयमा घरमै काम गरेर बस्छन्। अन्य समयमा भारत, अलमोडामा काम गर्न जान्छन्।

त्यसो त धनमाया आफैँ पनि निकै बदलिएकी छन्। यो सबै छलफल कक्षा र तालिमकै परिणाम हो। पाँच वर्षअघिसम्म नजिकको वनमा घाँस चोर्न जान्थिन्। सामुदायिक वनको साधारणसभा चलिरहेको मौकामा चोरी गर्न जाने गरेको क्षण उनी कहिल्यै बिर्सन सक्दिनन्। अहिले उनी आफैँ वन हेरालु छिन्। दिनरात वन जोगाउन खटिन्छिन्। 'ती दिन सम्झँदा अहिले पनि हाँसो उठ्छ, म पनि त्यस्तो थिएँजस्तो लाग्छ,' उनले आफ्नो विगत यसरी खुलाइन्, 'म कस्तो थिएँ भन्ने पुष्टि यही घटनाले गर्छ।'

टोल, छिमेक, समाज र पूरै गाविसमा बिस्तारै धनमायाका सामाजिक कार्यको प्रशंसा हुन थालेको छ। सबैतिर उनको नेतृत्व खोजी हुन थालेको छ। सबैका मुखबाट उनकै प्रशंसा सुन्न थालेपछि उनका श्रीमानको व्यवहारमा पनि एकाएक परिवर्तन आएको छ।

अहिले वडा र गाउँतहमा धनमायाले नेतृत्व र प्रतिनिधित्व नगरेको सायदै कुनै संस्था होलान्। उनी हरेक संघसंस्थामा कुनै न कुनै रूपमा संलग्न छिन्। भौतिक शरीरभन्दा पनि उनको बुझाइ र नेतृत्व क्षमताका कारण सबै उनलाई सम्झन पुग्छन्।



छलफल कक्षा, तालिम, गोष्ठी र अन्तर्क्रियाबाट तिखारिएकी उनलाई स्थानीय संरचना र त्यसमा महिला नेतृत्वबारे राम्ररी थाहा छ। सिलाइकटाइ, सुधारिएको चुलो, क्षमता वृद्धि र नेतृत्व सीप, योजना तर्जुमा, सामाजिक अंकतालिका, सूचनाको हकलगायत दर्जन बढी तालिम लिएकी उनी जुन संस्थामा प्रतिनिधित्व गर्छिन्, त्यहाँ केही न केही परिवर्तन ल्याउन सफल हुन्छिन्। हरेक काममा उनको प्रभावकारिता बढ्दो छ।

धनमाया नेपाल राष्ट्रिय शिव प्राथमिक विद्यालय निर्माण समितिकी अध्यक्ष र विद्यालय व्यवस्थापन समितिकी सदस्य हुन्। वडा नागरिक मञ्चकी सदस्य, दोस्रो खानेपानी उपभोक्ता समिति ५ र ६ की उपाध्यक्ष, वडास्तरीय महिला सञ्जालकी अध्यक्ष र गाविसकी सदस्य हुन्। वडा नं ५ र ६ गाउँस्तरीय क्लिनिककी अध्यक्ष पनि धनमाया नै हुन्। यतिमात्र कहाँ, लामापोखरी सामुदायिक वनकी हेरालु पनि हुन् उनी।

आफू संलग्न दर्जनौँ संस्थाका बैठक, अन्तर्क्रिया र छलफलमा भाग लिन र विकास-निर्माणका प्रस्ताव लैजान धनमायालाई भ्याइनभ्याइ हुन्छ। त्यसैले उनी बिहान तीन बजे नै उठ्छिन्। घर सफा गर्ने, पानी ल्याउने र खाना पकाउने काम लगभग पाँच बजेसम्म

सकिन्छ। दुई छोरी र एक छोराकी आमा धनमायालाई उनीहरूको स्कुल तयारीमा पनि त्यत्तिकै हतारो हुन्छ। गोठमा एकहल गोरु र ५ वटा बाख्रा पालेकी छन्। तिनलाई खानपिनको व्यवस्था गर्दा ६ बजिसक्छ। अब उनलाई सामाजिक काममा निस्कन हतार भइसकेको हुन्छ।

'घरपरिवार, टोल छिमेक र समाजलाई मिलाएर अघि बढिसक्नुभएको छ,' स्थानीय शान्ति सामुदायिक छलफल केन्द्रकी सहजकर्ता दिलमाया सुनार भन्छिन्। उनकै शब्दमा सबैलाई मिलाउने क्षमताकी धनी छिन् धनमाया। निष्पक्षरूपमा काम गर्छिन्। यी दुई गुणले पनि सबै संरचनामा उनको माग भइरहन्छ।

आफू अध्यक्ष रहेको गाउँघर क्लिनिकको दुईकोठे भवन बनाइन्, त्यसमा शौचालय व्यवस्था गरिन् धनमायाले। 'स्थानीय घन्टौं हिँडेर स्वास्थ्यचौकी पुग्थे, यो क्लिनिक बनेपछि निकै सजिलो भएको छ। उहाँले गाविसको रकम जोरजाम गराएर ल्याउनुभयो,' क्लिनिकनजिकैको गुमी-६, भर्लेनीका स्थानीय शेरबहादुर बुढाले भने, 'गर्भवती र बालबालिकाले खोप लगाउन पाएका छन्। निःशुल्क औषधि पाएका छन्।'

विद्यालय निर्माण समितिमा बसेर धनमायाले थप एक कक्षाकोठाका लागि गाविसबाट बजेट निकासा गराउन सफल भइन्। टुहुरा बालबालिकाका लागि छात्रवृत्ति र पोसाक व्यवस्था गरिन्। सदस्यका हैसियतले आफैँले प्रस्ताव लगेर यो काम गरेकी थिइन् उनले। नियमित सरसफाइको तालिका बनाएर लागू गराइन्।

'पुरुष नेतृत्वमा आउँदा राजनीति बढी हुने, काम नहुने हुन्थ्यो। उहाँ आएपछि राजनीतिक विवाद कम भएको छ। रोकिएका काम पनि भएका छन्,' प्रधानध्यापक गौतम पुन भन्छन्, 'महिला भए पनि श्रमदानबाट गरिने कामहरू पनि सरल भएका छन्। उपभोक्तालाई काममा लगाउन र सहमत गराउन सजिलो भएको छ।'

खानेपानी उपभोक्ता समितिमा उपाध्यक्ष रहँदा उनले क्लिनिकमा धारो पुऱ्याइन्। वडा नं ६ मा दुइटा धारा थपिन्। उनकै नेतृत्व र पहलमा 'एक घर एक धारा' को अवधारणा लागू हुँदैछ गाउँमा। यसका लागि बजेट ल्याउने पहलमा छिन् अहिले उनी। यतिमात्र होइन, विवाह, दुःख परेका बेला र घर ढलान गर्ने बेला सहजरूपमा पानी उपलब्ध गराउने निर्णय पनि गराएकी छन् धनमायाले। 'पहिला-पहिला १४ घरपरिवार एउटै धाराको



पानी खान्थे। अहिले ६ घरपरिवारले एउटा धाराको पानी खान्छन्,' गुमी-६, माथिल्लो भर्लेनीकी डिल्लीकुमारी थाडाले भनिन्, 'गाग्री बोकेर माथि जानुपर्थ्यो, घन्टौं लाइन बस्नुपर्थ्यो, अहिले ढुक्क छ।'

यी सबै विकास-निर्माणका काम गाउँ विकास समितिको कार्यालयमा गएर ठोकिन्छन्। स्थानीय संरचनाका विकास र गठनमा केही न केही भूमिका गाविसको पनि हुन्छ। पछिल्लो समय यो निकायमा महिला नेतृत्वको प्रभाव बढ्दै गएको छ।

गुमी गाउँ विकास समिति कार्यालयका सामाजिक परिचालक खिम विक भन्छन्, 'गाविस परिषद बैठकमा धनमायाले धेरै प्रभाव पार्नुभएको छ। विशेषगरी महिला नेतृत्वमा भइरहेका विकास निर्माणका लागि बजेट माग गर्ने मुद्दामा उहाँको जोडबल धेरै देखेको छु।' विकका अनुसार विद्यालयको छाना बनाउन, क्लिनिक, शौचालयका लागि भनेर जम्माजम्मी करिब ९३ हजार रूपैयाँ लगिएको छ।

'महिलाको नेतृत्व पारदर्शी भएको पाएको छु, रकम फछ्र्योट र बिल भर्पाई बुझाउने

सवालमा उहाँहरू निकै पारदर्शी र लगनशील हुनुहुन्छ, हिसाबकिताब पनि स्पष्ट हुन्छ,' विकले महिला नेतृत्वको प्रशंसा गर्दै भने । गाविसमा महिला क्षमतावृद्धि र महिला लक्षित बजेट करिब २ लाख रूपैयाँ हाराहारी हुन्छ। त्यही बजेट सबै वडाले प्राथमिकताका आधारमा बाँड्छन् ।

धनमाया वन हेरालु भएपछि सामुदायिक वनमा काठ, दाउरा, हरिया रुख काटिने क्रम पनि रोकिएको छ। काठदाउरा चोरी भएका पहिलाका मुद्दा अहिले पनि छन् । पुर्जीबापत स्थानीय उपभोक्ताले उठाएको पैसा हिनामिना भएका मुद्दा पनि छन् । उनी हेरालु भएपछि यस्ता मुद्दा कम भएका छन्। 'पुरुषलाई वन हेरालु राख्दा बदमासी गर्नेलाई पक्रने र जरिवाना तिराउने काम हुँदैनथ्यो, उनी आएपछि यो क्रम बढेको छ। जरिवानाको पैसा समूहमै जम्मा भएको छ,' लामपोखरी सामुदायिक वन वडा न. २ र ७ का अध्यक्ष तथा समूहका सहसचिव दिलबहादुर गुरुङले भने, 'पुरुष हेरालु राख्यो, सधैँ रक्सी खाएर घर बस्ने, वन नजाने गर्थे । अहिले यो समस्याबाट पनि मुक्ति पाएका छौँ ।'

धनमाया वनको रेखदेखसँगै त्यसको संरक्षणको काम पनि गर्छिन् । 'आँसी लिएर जान्छु, वनमारा फाँड्छु, रुख बिगार्ने लहरा पनि काट्छु,' उनले भनिन्, 'अब वनभित्रका वनमारा र लहरामात्र होइन, टोल-छिमेक र समाज बिगार्ने जोकोहीलाई तह लगाउन सक्छु भन्ने साहस बढेको छ ।'

गुमीकै अर्की सहजकर्ता पुष्पा पहाडी धनमायाबारे भन्छिन्, '०६६ सालमा पहिलोपटक एउटा कार्यक्रममा भेट भएको धनमायाजीसित। त्यतिबेला उहाँलाई लेख्न र बोल्न आउँदैनथ्यो, साथीहरूबीच परिचय गर्ने कार्यक्रम थियो। केही नजानेपछि मैले नै सिकाएकी थिएँ ।'

चन्दा पुन

३२ वर्ष, खानीखोला- ३, मुंग्रे



# जसले परिवारमा छोरीको महत्त्व बुझाइन्

दुई/चार जनालाई एकैठाउँमा देख्दा पनि उनलाई डर र लाज लाग्थ्यो । 'महिला पनि अरूसँग बोल्छन् र ?' जस्तो हुन्थ्यो । महिलाले बोल्दा गल्ती हुन्छ कि भन्ने लाग्थ्यो

'मलाई नसोधी केही निर्णय नगर्नुहोला,' खानीखोला-३, मुंग्रेकी ३२ वर्षीया चन्दा पुनले श्रीमान टीकाराम पुनलाई आग्रह गरिन् । १५ वर्षमा बालविवाह गरेर घर भित्रिएकी उनले आफ्ना श्रीमानलाई गरेको यो आग्रहका पछाडि थुप्रै घटनाक्रम जोडिएका छन् ।

चार सन्तानकी आमा चन्दासँग ०५४ सालमा विवाह गरेर घर भित्रिँदा श्रीमानसँग बोल्ने साहस पनि थिएन । बुबाआमा सानैमा बितेकाले उनले विद्यालय शिक्षासमेत पूरा गर्न सकिनन् । पाँच कक्षामै पढाइ छाड्नुपर्‍यो । त्यसपछि विवाह भयो ।

घर आएपछि पनि उनमा पढ्ने रहर थियो तर आफ्नो त्यो इच्छा मनभित्रै दबाएर राखिन् । यतिसम्म कि श्रीमानसँग आफ्नो चाहना व्यक्त गर्ने हिम्मत पनि गर्न सकिनन् । 'विवाह भएर आउँदा म स्कुल भर्ना हुन्छु भन्ने शक्ति पनि थिएन', उनले भनिन्, 'मैले कसैलाई भनिनँ । त्यतिबेला घरकाले बुझ्ने अवस्था पनि थिएन ।'

दुई/चार जनालाई एकैठाउँमा देख्दा पनि उनलाई डर र लाज लाग्थ्यो । 'महिला पनि अरूसँग बोल्छन् र ? जस्तो हुन्थ्यो । हामीले बोल्दा गल्ती हुन्छ कि भन्ने लाग्थ्यो,' उनले भनिन्, 'घरमा काम आइपर्थ्यो, त्यही गर्नुपर्थ्यो ।'

खाना पकाउने, घाँस-दाउरा काट्ने र भैंसी गोठालो जाने प्रमुख काम थियो चन्दाको । घरबाहिरको काम र घरको कुनै पनि निर्णय श्रीमानले मात्र गर्नुपर्छ भन्ने छाप उनको दिमागमा सानैदेखि पारिएको थियो । माइतीमा हुर्किँदै गर्दा उनले त्यही सिकेकी थिइन् । सहारे गाविस भालुखोलास्थित माइतीघरमा हुर्किएकी थिइन् चन्दा । पुरुषप्रधान समाजमा हुर्किएकी उनी हरेक काम गर्दा श्रीमानको अनुमति लिन्थिन् ।

'महिला भएर जन्मिनु नै गलत रहेछ भन्ने सोच्थेँ तर आजकल त्यस्तो लाग्दैन,' चन्दाले विगत र वर्तमानबीचको फरक खुट्ट्याउँदै भनिन् ।

उनमा यो परिवर्तन त्यत्तिकै आएको होइन । यसबीचमा उनले धेरै कुरा सिकेकी छन् । सधैँ घरको काममा रुमल्लिने, कहिल्यै बाहिर ननिस्कने चन्दा अहिले दिनहुँ सामाजिक कामको पोको बोकेर निस्कन्छिन् ।

जब उनी गाउँको आमा समूहमा प्रवेश गरिन्, धेरै कुरा सिक्ने, थाहा पाउने अवसर पाइन् । आमा समूहमा बसेर काम गर्दा उनले महिलाका अधिकारबारे जानकारी पाइन् । महिला र



पुरुषबराबर हुन्, यी दुवैका अधिकार समान छन् भन्ने अलिअलि बुझ्न थालिन्। महिला अधिकारसँग सम्बन्धित कानुन अध्ययन गर्न थालिन्।

'महिलाका विषयमा लेखिएका कुनै पनि कागज, पुस्तक देख्नै हुन्नथ्यो, पढिहाल्थैँ। नबुझे श्रीमानलाई सोध्थैँ,' आफूलाई ज्ञानले तिर्खादाको अनुभव सुनाउँदा उनलाई आनन्द लाग्छ। अहिले उनी आमा समूहकी सचिव भइसकिन्। यसबीचमा उनले स्वास्थ्य स्वयंसेविकाको भूमिका पनि निर्वाह गरेकी छन्।

'सधैँ महिला र बालबालिकाका काममा हिँडिरहनुपर्ने भएपछि यसबीचमा मैले धेरै कुरा सिकेँ,' उनले भनिन्। यो सिकाइ र भोगाइको प्रयोग घरबाटै गर्नुपर्छ भन्ने सोच आयो उनमा।

चन्दाले सबैभन्दा पहिले आफ्नै श्रीमानसँग आफ्ना अधिकार माग्न थालिन्। घरको काम र जिम्मेवारी बाँडफाँट गर्न थालिन्। सुरुसुरुमा श्रीमानले उनका कुरा टेरपुच्छर लगाएनन्। चन्दाले हरेस खाइनन्। घरसँगसँगै समाजमा समेत महिला अधिकारका विषयमा कुरा उठाउन थालिन्। महिलालाई एकजुट गराउँदै लगिन्।

बिस्तारै चन्दाले सफलता पाउन थालिन् । समाजमा महिला र पढेलेखेका पुरुषले उनको नेतृत्व क्षमताको प्रशंसा गर्न थाले । 'यो देखेर श्रीमानको व्यवहारमा पनि परिवर्तन आयो । काम र जिम्मेवारीको बाँडफाँट हुन थाल्यो,' परिवारमा परिवर्तनका शृंखला यसरी जोडिन पुगेको बताउँछिन् उनी ।

आफ्नै तरिकाले काम गर्ने र निर्णय गर्ने श्रीमान अचेल हरेक कुरामा चन्दासँग सल्लाह लिन्छन् । 'हिजोआज खसी-बाख्रा बेच्नुपर्‍यो भने पनि मलाई सोध्नुहुन्छ। यतिमात्र कहाँ हो र! खाना पकाइदिने, भाँडा माझ्नेजस्ता घरेलु काममा पनि सघाउन थाल्नुभएको छ,' उनले सुनाइन् ।

दुई वर्षअघिसम्म चन्दाका श्रीमान टीकाराम घरभित्रका काम केही पनि गर्दैनथे । पुरुषले खाना पकाउन र भाँडा माझ्न हुँदैन भन्ने सोचमा पूरै परिवर्तन आएको छ अहिले ।

२०५६ मा एसएसली टेस्ट परीक्षा पास गरेका टीकाराम आफैँ अहिले श्रीमतीका प्रशंसक बनेका छन् । 'यस (चन्दा) को क्षमता र यसले भनेको कुराले गर्दा ममा परिवर्तन आएको हो । ऊ समाजमा बोल्नसक्ने भएकी छ। महिला हिंसाका कुरा स्पष्ट राख्छे। त्यसैले उसलाई सबैले पत्याउन थालेका छन्,' टीकारामले भने ।

बाबुआमाले जे सिकायो, केटाकेटीले त्यही सिक्छन् भन्ने चरितार्थ भएको छ चन्दाको परिवारमा । उनका छोराहरूसमेत महिलाका अधिकारबारे बुझ्न थालेका छन् । आमाको व्यवहारले बुबामा परिवर्तन आएको हाकाहाकी भन्छन्, उनका माहिला छोरा सुरेश पुन ।

'बुबाले काम गर्न थालेको दुई वर्षमात्र भयो । ममीले सिकाएकाले होला, सबै किसिमका काम गर्न थाल्नुभएको छ,' सुरेशले सुनाए ।

यतिमात्र होइन, आफ्नी श्रीमतीमा घरपरिवार, टोल र समाजलाई मिलाएर लैजाने क्षमता देखेपछि टीकारामले पनि महिलाको पारिवारिक महत्त्व बुझ्न थालेका छन् । 'परिवारको व्यवस्थापन गरेर समाज परिवर्तनमा छोरीको भूमिका धेरै हुन्छ भन्ने कुरा बुझियो, त्यसैले छोरी पाउने आसमा चार छोरा जन्माइयो ।'

टीकारामको कुरामा चन्दा पनि सहमत छिन् । चन्दाले 'भो अब बच्चा नजन्माऔँ' भन्दा पनि टीकाराम छोरीको आस गरिरहेका छन् । यसलाई परिवारभित्रको सबैभन्दा ठूलो परिवर्तन मान्छिन् चन्दा ।



चन्दा घरकी कान्छी बुहारी हुन्। टीकारामको विवाह नहुँदै उनका दुई दाजुको निधन भइसकेको थियो। आठ दिदीबहिनीमध्ये पाँच बितिसके। ७९ वर्षीय बुबा अमरबहादुर पुनलाई विगतले पिरोलिरहन्छ। कान्छीबुहारी चन्दाको क्षमता र छोरामा आएको परिवर्तन नै उनको बाँच्ने आधार भएको छ अहिले।

'गाउँठाउँ र समाज मिलाउनैपर्‍यो, देश फुटाउने काम नगरोस्, मिलाउने काम गरोस्, घरको काम हामी गर्छौं,' अमरबहादुर छोराबुहारीको खुलेरै प्रशंसा गर्छन् र सफलताका निम्ति आशीर्वाद दिन्छन्।

६ महिनाअघि मात्र सुरु भएको लालिगुराँस छलफल केन्द्रकी सहभागी पनि हुन् चन्दा। महिला हिंसा, अधिकार र नेतृत्वबारे अन्य सहभागीभन्दा उनले धेरै बुझेकी छन्। छलफल केन्द्र र समूहले गर्ने हरेक क्रियाकलापमा उनी नेतृत्व लिन्छिन्।

लालीगुराँस छलफल केन्द्रकी सहजकर्ता तुलसा खनाल (खत्री) ले चन्दा धेरै पहिलेदेखि स्वास्थ्य स्वयंसेविका भएकाले छलफल केन्द्रका अरू सहभागीभन्दा क्षमतावान रहेको बताइन्।

'हरेक कामको नेतृत्व लिनुहुन्छ, जिज्ञासु हुनुहुन्छ र समस्याहरू जुनसुकै ठाउँमा पनि स्पष्टसँग राख्न सक्नुहुन्छ,' चन्दाबारे तुलसाको बुझाइ छ। तुलसाका अनुसार चन्दाले मुंग्रे-३ स्थित नेपाल राष्ट्रिय प्राथमिक विद्यालयका लागि खानीखोला गाविसमा गएर ३० हजार रूपैयाँ बजेट निकासा गराइन्। 'पहिला २० हजारमात्र दिएका थिए, चन्दा दिदी गएर कराउनुभयो, १० हजार थपिदिए', उनले भनिन्।

आमा समूह र छलफल केन्द्र मिलेर गाउँमा २ किलोमिटर सडक बनाएका छन्, चन्दाकै नेतृत्वमा। समाजसुधार बहुउद्देश्यीय सहकारी संस्था, लघुवित्त कार्यक्रम केन्द्रकी प्रमुख पनि हुन् उनी। प्राथमिकताका आधारमा केन्द्रबाट स्थानीयलाई ऋण उपलब्ध गराउनु उनको जिम्मेवारी हो।

सहजकर्ता तुलसाका अनुसार छलफल केन्द्रका सहभागी र आमा समूहका सदस्यले स्थानीय तहमा घरझगडा पनि मिलाइरहेका छन्। राष्ट्रिय अभियान सफल पार्न स्थानीय तहमा कार्यक्रम पनि गरिरहेका छन्। तुलसाका अनुसार अन्तर्राष्ट्रिय महिला अभियान, नागरिकता तथ्यांक संकलन, विवाह दर्ता, जन्मदर्ता तथ्यांक संकलन गरिसकेका छन्। यी कागजपत्र नबनाएका घरपरिवारलाई बनाउन सघाउने काम पनि यिनै समूहको हो। 'भौगोलिक विकटता र शैक्षिक स्तरका कारण यहाँका महिलालाई अघि बढ्न अझै पनि धेरै समस्या छ,' तुलसाले आफ्नो अनुभव सुनाउँदै भनिन्, 'पढेलेखेका पुरुषको संख्या कम छ, महिला अघि बढनुपर्छ भन्ने सोच अधिकांशमा छैन, हाम्रो प्रयासले चन्दा दिदीजस्ता दुईचारजना महिला सक्षम हुनुभयो भने समाज परिवर्तन हुन सक्छ।'

भोटेचुली र लालीगुराँस छलफल केन्द्र

खानीखोला



# बामे सर्दैछन्
# खानीखोले महिला

छलफल केन्द्र सुरु भएको तीन महिनामै यहाँका महिलाले आफ्ना अधिकार र हिंसाका कुरा बुझ्न थालेका छन्, उनीहरू धेरै जिज्ञासु भएका छन्, घरभित्रका समस्या पनि राख्न थालेका छन्



सुर्खेत जिल्लाकै विकट गाविस हो, खानीखोला जहाँ दैनिक एउटामात्र बस जसोतसो भीरको साँघुरो बाटो छिचोल्दै पुग्छ र फर्किन्छ। वर्षायाम सुरु भएपछि यो सेवा पनि बन्द हुन्छ। जिल्लाको पूर्वी सीमामा रहेको यो गाविस यस भेगकै दुर्गम मानिन्छ।

भौगोलिक विकटताजस्तै छ, खानीखोलाको शैक्षिक स्तर। 'शिक्षित पुरुषको संख्या त कम छ, यहाँका महिला कहिले शिक्षित हुने होलान् ?' लालिगुराँस छलफल केन्द्रकी सहजकर्ता तुलसा खनाल (खत्री) चिन्ता गर्छिन्।

उनको अनुभवमा महिलालाई सशक्त र अधिकारसम्पन्न गराउनुपर्छ भन्ने पुरुषको उपस्थिति यस गाविसमा निकै कम छ। शिक्षित पुरुष कम भएकै कारण महिलाको वृत्तिविकासमा समस्या छ। यसकै कारण महिलामाथि हुने हिंसाका घटना पनि त्यत्तिकै बढ्दो छ। शिक्षा यहाँको एउटा प्रमुख समस्या हो। अज्ञानताका कारण हुने स्वास्थ्य समस्या स्वाभाविक नै भए।

'पाठेघर खस्ने समस्या धेरै छ, घरेलु हिंसा पनि बढी छ,' खनालले सुनाइन्।



‘अक्सफाम’ले स्थानीय ‘वाम’ नामक संस्थाको सहयोगमा तीन/चार महिनाअघिदेखि मात्र खानीखोला गाविसका नौवटै गाविसमा छलफल केन्द्र चलाइरहेको छ। यी केन्द्रका सहजकर्ताले भर्खर काम थालेका छन्। यी केन्द्रका सहजकर्तालाई कक्षामा महिला सहभागिता बढाउनै हम्मेहम्मे परेको छ। ‘कोही महिला आउनै मान्दैन, पुरुषहरू पनि कक्षामा गएर के हुन्छ र भन्छन्, आउनै दिँदैन,’ खनालले भनिन्, ‘जानुपर्छ भन्ने पढेलेखेका पुरुष धेरै कम छन्।’

कार्यक्रम ६ महिनाअघिबाट सुरु भए पनि वर्षायाम, तालिम र चाडबाडले तीन महिनादेखि मात्र नियमित रूपमा छलफल केन्द्र सञ्चालन भइरहेका छन् यस गाविसमा। कक्षा सुरु भएको तीन महिनामात्रै भए पनि यहाँका महिलामा चेतनाको स्तर भने बढिरहेको छ। लालीगुराँस केन्द्रमा हिजोआज दैनिक २५ जना महिला सहभागी हुन्छन्।

‘अधिकांश महिला पहिला-पहिला त परिचय आदानप्रदान गर्न पनि सक्दैनथे। हिजोआज त नयाँ मान्छे देखेपछि परिचय गर्न खोज्छन्। आफ्नो विस्तृत परिचय दिन्छन्,’ उनले भनिन्।

तुलसाको अनुभवमा पहिला-पहिला यहाँका महिला नयाँ पुरुष मान्छे देखेपछि डराउँथे। घरबाट बाहिरै निस्कँदैनथे।

यहाँको समाजलाई घरेलु हिंसाले पनि त्यत्तिकै गाँजेको छ। श्रीमान र श्रीमती, देवर र भाउजूबीचका झगडा धेरैपटक मिलाएको अनुभव छ तुलसासँग। केन्द्रकी अध्यक्ष तुलसाले सामाजिक महिला नेतृ तथा कक्षाकी सहभागी चन्दा पुन र उनका श्रीमान टीकारामको संयुक्त पहलमा धेरैपटक घरेलु झैझगडा मिलाएकी छन्।

यस्तै अवस्था छ, खानीखोला गाविस-२ चोल्पाको पनि। यहाँ भोटेचुली सामुदायिक छलफल केन्द्र सञ्चालन भइरहेको छ। नियमित कक्षा सञ्चालन भएको तीन महिनामात्र भयो। यस केन्द्रकी सहजकर्ता ३० वर्षीया भीमा मल्ल आफ्नो जिम्मेवारी पूरा गर्ने क्रममा धेरै चुनौती सामना गरिरहेकी छन्।

विवाह भएको एक वर्षमै घर छाडेर माइत बसेकी मल्लले घरभित्रै आफ्नो अधिकारका लागि संघर्ष गरिरहेकी छन्। श्रीमानले विवाहको एक वर्षपछि कान्छी श्रीमती ल्याएपछि उनी माइतै बस्न थालेकी हुन्। 'श्रीमान कान्छी श्रीमतीसँग बस्नुहुन्छ, म माइतै बस्छु,' उनले दुखेसो गरिन्।

श्रीमानसँगको सम्बन्धबारे उनी यसभन्दा बढी खुल्न चाहिनन्। ०५६ मा विवाह भयो, ०५७ मा श्रीमानले अर्की श्रीमती ल्याए। भीमाको एउटा छोरो छ, उनीसँगै बस्छ।

माइत बसे पनि स्वावलम्बी बन्न सिकाएको छ छलफल केन्द्रले भीमालाई। उनी आफ्नै कमाइबाट दैनिकी चलाउँछिन्। श्रीमानको कुनै पनि सम्पत्ति आफूले नलिएको उनको भनाइ छ। माइतमा उनका बुबा, दिदी, दाइ-भाउजू र दुई भदै छन्।

आफ्नै परिवारभित्र हिंसा र अधिकारको लडाइँमा रहेकी उनी टोल, समाजका महिलाका अधिकारका लागि पनि उत्तिकै क्रियाशील छिन्। उनको अनुभवमा चोल्पामा पनि धेरै संख्याका महिला अशिक्षित छन्। घरेलु हिंसा त्यत्तिकै छ। 'महिला सधैँ चुलोचौकोमा सीमित हुनुपर्छ भन्ने सोचले जरा गाडेको छ,' भीमा भन्छिन्, 'म आफैँले पनि धेरै पछिमात्र महिला अधिकार र महिला हिंसाबारे बुझ्ने मौका पाएको हुँ।' आफू अहिले महिला अधिकार के-के हुन्, यसको प्राप्तिका लागि राज्यबाट के-कस्ता नियम-कानुन बनाइएका छन् भनेर अध्ययन गरिरहेको उनले सुनाइन्।



'म आफैँ महिला अधिकारबारे पढ्दै छु, कक्षामा सहभागी महिलालाई पनि त्यसका आधारमा पढाइरहेकी छु,' उनले भनिन्। भीमाको कक्षामा २० देखि २५ जना महिला सहभागी हुन्छन्। हरेक दिन घरपरिवार, टोल र छिमेकमा भएको महिला हिंसाका घटनाबारे छलफल हुन्छ। क्षमता अभिवृद्धि, संरचना र महिला नेतृत्वबारे पनि छलफल हुने गरेको भीमा बताउँछिन्।

'आफ्ना अधिकार र हिंसाका कुरा बुझ्न थालेपछि महिलाहरू धेरै जिज्ञासु हुन थालेका छन्। आफ्ना घरभित्रका समस्या पनि राख्न थालेका छन्,' उनले भनिन्। भीमाका अनुसार अहिले महिलाहरू सार्वजनिक चासोका मुद्दा लिएर गाउँ विकास समितिको कार्यालयमा जानसक्ने भएका छन्। आफ्ना माग र समस्या राख्न थालेका छन्। 'यो तीन महिनाको उपलब्धि हो,' उनले भनिन्।

भीमाका अनुसार नाम लेख्न नसक्ने र हस्ताक्षर गर्न नसक्ने अवस्थाका महिला अहिले कुनै पनि कागजमा हस्ताक्षर गर्नुअघि पढ्नसक्ने भएका छन्। पढ्न नसक्नेले अरूलाई पढ्न लगाउँछन् र बुझेपछि मात्र हस्ताक्षर गर्छन्।

'यतिमात्र कहाँ हो र ! महिलाहरू विद्यालयका गतिविधि अनुगमन गर्नसमेत जान थालेका छन् । गाविसमा महिलाका नाममा आएको बजेटको हिसाबकिताब पनि गर्छन्,' भीमाले सुनाइन् ।

त्यसो त भीमालाई नै पहिले-पहिले बैंक पुगेर पैसा निकाल्न गाह्रो हुन्थ्यो । अरूको सहारा लिनुपर्थ्यो । अहिले आफैँ बैंक पुगेर पैसा निकाल्नसक्ने भएकी छन् ।

'अझै धेरै वृत्तिविकास गर्नुपर्ने भएको छ, यहाँका महिलालाई सिकाउनुपर्ने कुरा पनि धेरै छन्, मैले सक्दो मिहिनेत गरिरहेकी छु,' उनले भनिन् ।

स्थानीय संरचनामा महिलालाई राख्ने क्रम बढेसँगै यहाँका महिलामा वृत्तिविकासको चुनौती थपिएको उनको अनुभव छ ।

भीमा अहिले सहजकर्तामात्र छैनन्, अन्य धेरै संस्थामा संलग्न छिन् । उनी वातावरण बहुउद्देश्यीय सहकारी संस्थाकी उपप्रमुख, कृषि समूहकी सदस्य, खानेपानी उपभोक्ता समूहकी कोषाध्यक्ष, स्थानीय उच्च माध्यमिक विद्यालय व्यवस्थापन समितिकी सदस्य र महिला सशक्तीकरणकी सचिव पनि छिन् ।

'सबैभन्दा बढी समय केन्द्र सञ्चालनमै दिएकी छु,' भीमाले भनिन्, 'यहाँका अरू महिलालाई पनि नेतृत्व तहमा पुऱ्याउने अठोट लिएकी छु ।' खानिखोला गाविसका नौवटै वडामा छलफल केन्द्र सञ्चालन भइरहेका छन् । अन्य केन्द्रका सहजकर्ताले पनि तुलसा र भीमाले जस्तैगरी आफ्नो जिम्मेवारी पूरा गरेका छन् ।

उविकला नेपाल

गुमी गाविस- ४, सुर्खेत



# प्रतिस्पर्धी उविकला

उविकलाको लडाइँ तीन उद्देश्यले अघि बढिरहेको छ। पहिलो, गाविसस्तरका सबै संघसंस्थाको नेतृत्वमा महिला पुग्नुपर्छ। अधिकांशमा उनी पुगिसकेकी छन्। कतिपयमा नेतृत्वका लागि संघर्षरत छिन्। दोस्रो, जिल्ला र तेस्रो केन्द्रीय नेतृत्व उनको सपना हो।

'मैले महिलामाथि हुने घरेलु हिंसा नजिकबाट देखेकी छु। म अर्काले भनेको सहन सक्दिनँ। श्रीमानले श्रीमती कुटेका घटना हाम्रो समाज बग्रेल्ती छन्। सायद त्यही भएर मैले अहिलेसम्म विवाह नगरेको,' आफू अविवाहित रहनुको कारण खुलाउँदा उविकलाका आँखामा महिला हिंसाविरुद्ध आक्रोशका ज्वाला पढ्न सकिन्थ्यो।

गुमी-४, सुर्खेतकी ३६ वर्षीया उविकला घरकी दोस्रो सन्तान हुन्। दिदीबहिनीको घरजम भइसक्यो। दुई भाइले पनि विवाह गरिसके। उनले अहिलेसम्म बिहे गरेकी छैनन्। गर्ने सुर पनि छैन। अँ, परिवार र समाज परिवर्तनको भूमिकामा भने उनको अठोट, जिम्मेवारी र सक्रियता तीव्र छ। अधिकांश समय यही काममा दिँदा पनि हुन सक्छ, उनी अविवाहितै रहेकी।

गाविस स्तरका हरेक संरचनामा उविकला प्रतिनिधित्व गर्छिन्। कतिपयमा नेतृत्व नै। महिला नेतृत्व स्थापित गर्न उनी पुरुष नेतृत्वसँग दिनरात जुध्निरहेकी छन्। अधिकारको लडाइँमा होमिएकी उनलाई व्यक्तिगत जीवनबारे सोच्ने फुर्सदै कहाँ छ र ?

संघर्षशील छोरीको प्रगति र उपलब्धिमा रमाएका उनका ६३ वर्षीय बुबा पलबहादुर सार्की भन्छन्, 'विवाहबन्धनमा बाँधिएपछि आफूले चाहेको काम गर्न पाइँदैन। अरूको नेतृत्वमा हिँड्नुपर्छ भन्छे। त्यसले मैले पनि जोडबल गरेको छैन।'

उविकलाको लडाइँ तीन उद्देश्यले अघि बढिरहेको छ। पहिलो, गाविस स्तरका सबै संघसंस्थाको नेतृत्वमा महिला पुग्नुपर्छ। अधिकांशमा उनी पुगिसकेकी छन्। कतिपयमा नेतृत्वका लागि संघर्षरत छिन्।

जिल्ला र केन्द्रीय संरचनामा पनि महिला पुग्नुपर्छ भन्ने उनको सोच छ। महिलालाई जिल्ला स्तरीय संरचनाका नेतृत्वमा पनि पुऱ्याउने लक्ष्य छ उनको। 'म नेपाली कांग्रेसको सक्रिय सदस्य पनि हुँ, महिला संघको केन्द्रीय सदस्य बन्ने लक्ष्य छ,' उनले भनिन्, 'केन्द्रीय राजनीतिमा पुग्न पैसा चाहिन्छ, जुन मसँग छैन।'

यद्यपि, उविकला क्षमता प्रदर्शनमै विश्वास गर्छिन्। केन्द्रीय राजनीतिको जग स्थानीय सक्रियता र सफल नेतृत्व नै हो भन्ने केन्द्रविन्दुमा राखेकी उनी अहिले सबैको प्रतिस्पर्धी बनेकी छन्।



'मैले गरेको काम र मेरो भविष्य देखेर मेरा सहकर्मी दलका साथीहरू आत्तिन थाल्नुभएको छ, त्यसैले अरू जोसुकैलाई नेतृत्व दिने भने पनि देऊ तर उविकलालाई नदेऊ भन्ने साथीहरू पनि छन्,' उनले सामुदायिक वनको नेतृत्वमा पुग्न खोज्दा भएका अवरोध स्पष्ट पार्दै सुनाइन् ।

केन्द्रीय राजनीतिलाई मध्यविन्दुमा राखेर स्थानीय सक्रियता बढाएकी उनी गाविस स्तरका हरेक संरचनामा छिन् ।

०५६ मा एसएलसी गरेकी उविकलालाई त्यतिबेलासम्म सामाजिक क्षेत्रबारे कुनै जानकारी थिएन । एसएलसीलगत्तै उनी बिरामी परिन् । बीचमा पढ्न पाइनन् । त्यसैले उनले बल्ल प्लस टु उत्तीर्ण गरिन् ।

०६४ देखि सामाजिक अभियान र नेतृत्वको काम थालेकी हुन् उविकलाले । शान्ति सम्झौतापछि गुमीको दशरथपुरमा माओवादी शिविर बस्यो । सीमाको गाविसका लागि सिँचाइ कुलो निर्माण गर्न १२ लाख बजेट छुट्याइयो । सिँचाइ कुलो निर्माण समितिमा

उनी सचिव भइन् । 'पढेलेखेको, बोल्न जान्ने महिला भएर होला, मलाई त्यसमा सचिव बनाइयो तर त्यतिबेलासम्म मलाई समिति के हो ? यसको काम, कर्तव्य र जिम्मेवारी के हो भन्ने पनि थाहा थिएन । आर्थिक हिसाब-किताब पनि केही थाहा थिएन,' सामाजिक क्षेत्रको पहिलो अनुभव सुनाइन् ।

२०६४ मै उनले नागरिक शिक्षा र मतदाता शिक्षाको तालिम दिन गुमी, मैनतरा, रामघाट, कल्याण र लेखपर्सा गाविसमा तीन महिना जुटिन् । ०६५ मा दलित उत्थान समाज संघकी कोषाध्यक्ष भइन् । अन्य तीनजना महिला प्रतिस्पर्धीलाई उछिनेर ०६६ पुसमा उनी त्रिवेणी सामुदायिक छलफल केन्द्रकी सहजकर्ता बनिन् । केन्द्रमा सहभागी महिलालाई उनी अधिकार, महिला हिंसा, संरचना र महिला नेतृत्वको आवश्यकता र महत्त्वबारे पढाउन थालिन् ।

सामाजिक मुद्दाबारे केन्द्रमा छलफल हुन थाल्यो । अहिले यो केन्द्रबाट पाँच महिला नेतृत्व तहमा पुगेका छन् । तीन वर्षसम्म सहजकर्ताको भूमिका निर्वाह गरेपछि उनमा एकाएक आत्मविश्वास बढेर आयो । त्यसपछि गाविस स्तरका संघसंस्थामा नेतृत्वदायी भूमिकाका लागि पहल गर्न थालिन् ।

अहिले उनी गुमी गाविस महिला सञ्जाल महिला अधिकार मञ्चकी अध्यक्ष छिन् । महिला परिवर्तन साना किसान कृषि सहकारी संस्थाकी अध्यक्ष, गुमी-४ र ५ नमुना खानेपानी तथा सरसफाइ उपभोक्ता समितिकी सचिव, जिल्ला महिला अधिकार मञ्चकी सदस्य पनि हुन् उविकला । हालै काठमाडौं सम्पन्न राष्ट्रिय अधिवेशनमा उनी राष्ट्रिय महिला अधिकार मञ्चकी राष्ट्रिय सदस्य पनि निर्वाचित भएकी छन् ।

उनको नेतृत्वमा महिला सञ्जाल र समूहले संयुक्तरूपमा गत साउनको बाढीपहिरो पीडितका लागि २ लाख ७२ हजार ५३ रूपैयाँ संकलन गरेको छ । वडास्तरमा सञ्जाल विस्तार भएको छ । चालु बजेट छुट्ट्याएर बचेको बजेटलाई शतप्रतिशत मानेर त्यसको दश प्रतिशत रकम महिलाका समस्या समाधानमा खर्च गर्ने निर्णय गराएकी छन् उनैले । त्यही बजेटबाट नेतृत्व सीप तालिम, बंगुर र बाख्राका पाठा वितरण गर्ने भनेर ३५ हजार र ३१ हजार ५ सय रूपैयाँ छुट्ट्याइएको छ । महिला सहकारी घर निर्माणका लागि ५२ हजार, सामुदायिक क्लिनिक र शौचालयलाई गरेर २६ हजार बजेट निकासा भएको छ ।



प्रजनन र स्वास्थ्यसम्बन्धी नाटकमार्फत जनचेतना फैलाउने भनेर २० हजार र महिला सञ्जाल सुदृढीकरणका लागि ८ हजार रूपैयाँ छुट्याइएको छ। उनकै नेतृत्वमा एकदिने अन्तर्क्रिया कार्यक्रम गरेर जुवातास र जाँडरक्सी नियन्त्रण गर्न गाविस सचिवको संयोजकत्वमा विधान मस्यौदा समिति गठन भएको छ।

सहकारी संस्थातर्फ उनले ऋण लगानी र ऋण असुलीलाई प्रभावकारी बनाउन धितो अनुगमन तथा मूल्यांकन समिति गठन गरेकी छन्। यसले आफ्नो प्रतिवेदन पनि बुझाइसकेको छ। सहकारीको भवन निर्माणका लागि २ कट्ठा जग्गासमेत किनिएको छ।

'४ वडामा पानीको धेरै अभाव छ, यहाँका लागि एक करोडको योजना ल्याउने कोसिस गरेकी थिएँ, धेरै राजनीति भयो गर्न पाइनँ,' उनले भनिन्। डोरेनी थुम्का ग्रामीण सडक निर्माण समिति अध्यक्ष हुँदा उनको नेतृत्वमा ३५७० मिटरको सडक विस्तार भएको थियो। गाविसको बजेटमा करिब २ लाख रूपैयाँ र जनश्रमदानबाट यो सडक खनिएको थियो।

छलफल केन्द्रको पहल र उविकलाकै नेतृत्वमा गुमी स्वास्थ्यचौकीमा कुरुवा घर निर्माण हुँदैछ। यसका लागि केन्द्रले २० हजार २ सय रूपैयाँ संकलन गरेको थियो। अहिलेसम्म

६७ हजार खर्च भएको उविकला बताउँछिन् । 'बिरामी लिएर आउने मान्छेलाई बस्ने र खाने ठाउँको ठूलो समस्या छ, यो घर बनेपछि उनीहरूलाई धेरै सुविधा हुन्छजस्तो लागेको छ, निर्माण समितिमा बसेर उविकलाले यसको निर्माणमा समन्वयात्मक भूमिका खेलिरहनुभएको छ,' स्वास्थ्यचौकीका प्रमुख पूर्ण घर्तीले भने ।

दलित उत्थान समाज संघका तर्फबाट उविकलाले जनजाति, अपांग, जेष्ठ नागरिक, पिछडावर्गको उत्थानका लागि बजेट निकासामा पहल गरेकी छन् । पहिलो वर्ष ०६५/६६ मा ४९ हजार बजेट निकासा भएकोमा पछिल्लोपटक ०७१/७२ मा ८० हजार रूपैयाँ निकासा भएको छ ।

हरेक वर्ष रकम बढेको देखिन्छ । यो रकम त्यही वर्ग र समुदायको क्षमता र सीप विकासमा खर्च भइरहेको उविकला बताउँछिन् । उल्लिखित वर्गको उत्थानका कार्यक्रम, प्रोत्साहन र उत्प्रेरणाका कार्यक्रम सञ्चालन भइरहेका छन् । 'उहाँले जनअपेक्षाभन्दा बाहिर गएर कसैले अनियमितता गर्‍यो भने खुलेरै विरोध गर्नुहुन्छ,' गुमी-४, दलित उत्थान चुनौती समूहका अध्यक्ष इन्द्रबहादुर सुनारले भने ।

०६६ देखि ०६९ सम्म स्थानीय सामुदायिक वनमा सचिव भएर पनि काम गरिन् उविकलाले । आफू समितिमा हुँदाहुँदै नयाँ अध्यक्षले वनको काठ व्यवस्थापनमा बदमासी गरेको उनी बताउँछिन् । यसबारे अख्तियारमा पनि बेनामी उजुरी परेको थियो । जिल्ला वन अधिकृतसमेत स्थलगत निरीक्षणमा गए । 'मूल समितिको सचिवमा महिला, कोषाध्यक्षमा पनि महिला हुँदाहुँदै यो बदमासी भएपछि मैले यसको अध्यक्षमा पनि महिला नै हुनुपर्छ भनेर कुरा उठाएँ,' उनले भनिन्, 'सानो पदमा महिला राखेर बदमासी गर्न पाइँदैन भन्ने मेरो तर्क थियो ।'

यसपछि सामुदायिक वनको आकस्मिक साधारणसभा बस्यो । उपस्थितहरूले उनलाई मूल समितिको सचिवमा बस्न आग्रह गरे तर मानिनन् । 'सभाका ९५ प्रतिशतले अध्यक्षमा मलाई सिफारिस गरे तर पाँच प्रतिशतले मानेनन्,' उनले भनिन् । त्यसपछि उविकला २५ प्रतिशत उपभोक्ताको हस्ताक्षर संकलन गर्न २ देखि ७ वडा घुमिन् । उनले त्यो लगेर जिल्ला वन कार्यालयमा बुझाइन् । २१ दिनभित्र साधारणसभा गरेर नेतृत्व परिवर्तन गर्ने निधो भयो ।

उविकलाका अनुसार एकाएक स्थानीय नेता र शिक्षक वन कार्यालय गए। दुई पक्षबीच भनाभन भयो। त्यतिबेला जिल्ला वन अधिकृत शम्भुप्रसाद चौरसिया थिए। उनले नेता र शिक्षकहरूको कुरा सुने।

'हामी बोल्दा चुप लाग भने उनले, हामी जऱ्याकजुरुक उठेर तपाईं को हो चुप लाग भन्ने भनेपछि चौरसिया अर्को कोठामा गए, पछि कर्मचारी युनियनका अध्यक्ष आएर कुरा मिलाए,' उविकलाले भनिन्, 'यति गर्दा पनि वन समितिमा महिलालाई जान दिएका छैनन्। त्यसमा अहिले पनि जिल्ला वन कार्यालय र अध्यक्षको मिलोमतोमा अनियमितता भइरहको छ।'

उनका अनुसार महिलालाई पछि पारेका कारण यो वनले दुई वर्षसम्म काम गर्न सकेको छैन। पाँच दलले समितिका पदमा भागबन्डा गरेका छन्। तीनपटक साधारणसभा बोलाउँदा पनि सफल भएको छैन।

एमाओवादी जिल्ला कमिटी सदस्य डम्बरबहादुर सुनार उविकलाको नेतृत्व कुनै पनि पुरुषको भन्दा माथिल्लो हैसियतमा रहेको बताउँछन्। 'सबै महिला अगाडि बढ्नुपर्छ, हरेक बैठक र संस्थाका कार्यक्रममा महिलाले नेतृत्व पाउनुपर्छ भन्ने कुरामा उहाँको जोड र अडान देखिन्छ,' उनले भने, 'उहाँको सफलताले हेर्दा धेरै माथि पुग्नुहुन्छ जस्तो लाग्छ।'

गुमी गाउँ कमिटी, एमालेका अध्यक्ष भीमराज शर्माले शैक्षिक योग्यता र हिम्मत भएकी महिलाका रूपमा उविकलालाई चित्रण गर्छन्। 'समाजलाई अग्र गतिमा लैजान सकारात्मक सन्देश दिनुभएको छ, उहाँको नेतृत्वले राजनीतिक प्रतिस्पर्धामा महिला पनि आउन थाले भन्ने संकेत गर्छ,' उनले भने, 'विधिबाट आउने जुनसुकै नेतृत्व आवश्यक छ, म त्यसलाई चुनौती ठान्दिनँ।'

नेपाली कांग्रेसका जिल्ला कमिटी सदस्य पदमबहादुर गुरुङले उविकलालाई विकासशील व्यक्तिको दर्जा दिए। 'उहाँ यो पार्टी त्यो पार्टी नभनेर सबै पार्टीका महिलालाई एकजुट गराएर अघि बढिरहनुभएको छ,' उनले भने, 'हामीसँग सधैँ मलाई पछि नपार्नू है भन्छिन्।'

गुरुङले समाज अहिले पनि महिलालाई खुलेर अघि बढाउने पक्षमा नरहेको बताए। अझ कुनै पनि राजनीतिक दलमा महिलालाई नेतृत्व तहमा पुऱ्याउनुपर्छ भन्ने चेत नै नभएको

उनको ठहर छ। 'हरठाउँ र क्षेत्रमा महिला पछि पर्ने आर्थिक कारणले हो, यो राजनीतिमा पनि देखिन्छ,' उनले भने।

उविकलाले यो पनि बुझ्केकी छन्। 'मेरो अन्तिम सपना केन्द्रीय राजनीतिमा पुग्ने हो तर खै म कसरी पुग्छु होला र! मेरो आर्थिक पक्ष कमजोर छ,' उनी भन्छिन्।

भविसरा विक

गुमी गाविस-२, शिवनगरटोल



# भविसरा कसैसँग डराउँदिनन्

'सचिवका अगाडि मुखबाट शब्दै ननिस्कने, के बोल्ने के भनेजस्तो हुन्थ्यो, धेरै मानिस भेला हुने कार्यक्रममा डरले जहिल्यै पछाडि बस्थें'

डर, लाज र संकोच महिलाका कमजोरी हुन्। यही कारण उनीहरू समाजमा पछि परिरहेका छन्।

भविसरा विकलाई यो कुरा त्यतिबेलासम्म थाहा थिएन जतिबेलासम्म गाउँमा छलफल केन्द्र खुलेन र उनले त्यहाँ गएर पढ्न, बुझ्न र सिक्न पाइनन्।

गुमी गाविस-२, शिवनगरटोलकी भविसरा पनि अन्य ग्रामीण महिलाभन्दा फरक थिइनन्। बाहिरका मान्छेसित मात्र होइन, घरकै मान्छेसित समेत बोल्न डर लाग्थ्यो उनलाई। कसैले केही भन्लान् कि ? केही सोधिहाले के भन्ने ? बोल्दा गल्ती पो हुने हो कि ? यस्तैयस्तै संकोचको भारीले थिचिएकी उनी अचेल आफूलाई निकै हलुँगो महसुस गर्दैछिन् किनकि छलफल केन्द्रमार्फत ज्ञान लिएपछि उनले यो सबै भारी त्यहीँ बिसाइन्। अहिले त उनी न कसैसँग बोल्न लजाउँछिन् न प्रश्न सोध्न र कसैले राखेका जिज्ञासाको जवाफ दिन नै। कतै कार्यक्रममा जाँदा पनि उनी सबैभन्दा अगाडि धक नमानी बस्छिन्।

त्यतिमात्र होइन, डर र लाजको भारी बिसाइसकेपछि उनमा नेतृत्व क्षमताको समेत विकास भएको छ। उनी कैयन् स्थानीय संरचनामा सफल प्रतिनिधित्व गरिरहेकी छन्। पहिले आफ्नाबारे समेत राम्ररी सोच्न नसक्ने भविसरा अहिले दिनरात समाजका बारे सोच्छिन् र समाजकै सहयोग र विकासनिम्ति खट्छिन्।

'महिला आफ्नै कमजोरीले पछाडि परेका रहेछन्,' ४० वर्षीया भविसराले अनुभव बाँडिन्, 'श्रीमान, परिवार र समाजको डरले उनीहरूलाई पछाडि पारेको रहेछ।'

भविसराको जीवनमा परिवर्तनको लहर छाएको धेरै भएको छैन। उनी एक वर्षअघिसम्म पनि डर र संकोचकै सिकार थिइन्। 'परिवारका सदस्यभन्दा बाहिरका मानिससँग बोल्नै सक्दिनथेँ, पहिल्यै शरीर थरर्र काम्थ्यो,' उनले यसरी विगत सम्झिइन्।

आफू जानु नपर्ने ठाउँका लागि त उनको पाइलै सर्दैनथ्यो। कहिलेकाहीँ आफैँ नगइनहुने काम पर्थ्यो गाविस कार्यालयमा। उनी बल्लबल्ल त्यहाँ पुग्थिन् तर कार्यालयको कम्पाउन्डभित्र छिर्नै हच्किन्थिन्। कताकता डर लागेर आउँथ्यो उनलाई। कसरी भित्र जाने होला ? भित्र गएपछि पनि गाविस सचिवको प्रश्नको जवाफ कसरी दिने होला भन्ने डरले पहिल्यै मनमा डेरा जमाइसकेको हुन्थ्यो।



'सचिवका अगाडि मुखबाट शब्दै ननिस्कने, के बोल्ने के भनेजस्तो हुन्थ्यो,' उनले केही वर्षअघिको स्मरण गरिन्, 'धेरै मानिस भेला हुने कार्यक्रममा जाँदा पनि डरले जहिल्यै पछाडि बस्थैं।'

अगाडि बस्दा बोल्नुपर्‍यो भने के भन्ने ? पहिल्यै डर लाग्थ्यो उनलाई। भनिन्, 'कसैले केही सोध्छन् कि भनेर पछाडितिर छेकिएर बस्थैं।'

तर अहिले उनको जीवनशैली बदलिएको छ। गाउँमा छलफल केन्द्र खुलेदेखि उनमा थुप्रै परिवर्तन आएको स्वयं उनले पनि अनुभव गरेकी छन्। अचेल उनी निर्धक्कसँग आफ्ना अनुभव सुनाउन सक्छिन्। आफूजस्तै महिलालाई आफूले प्राप्त गरेका ज्ञान बाँड्नसमेत उनलाई कुनै संकोच लाग्दैन।

भविसरा नारी उत्थान छलफल केन्द्रकी अध्यक्ष हुन्। केन्द्रमा सहभागी हुँदै अध्यक्षसमेत बनिसक्दा तपाईंमा सबैभन्दा ठूलो परिवर्तन के आयो भनी सोध्दा भविसरा निर्धक्कसँग भन्छिन्, 'म डरमुक्त भएँ। हरेक कार्यक्रम र भेलामा पछाडि होइन, अगाडि गएर बस्छु। महिला भएर

आफूले भोगेका दुःख र त्यसलाई कसरी समाधान गर्ने भन्ने उपायहरूबारे अरूलाई सुझाउँछु।'

यसबाहेक उनी हरेक स्थानीय संरचनामा कुनै न कुनै भूमिकामा छिन्। पछिल्लो एक वर्षमा उनले धेरै संस्थामा प्रतिनिधित्व गर्ने मौका पाइसकेकी छन्। प्रतिनिधित्वमात्र होइन, विभिन्न संरचनामा बसेर त्यसको भूमिका पनि प्रभावकारीरूपमा निर्वाह गरिरहेकी छन्। यो सबै डर त्यागेर अगाडि बढ्दाको परिणाम हो।

भविसरा वडा नागरिक मञ्चकी सदस्य, गाविसस्तरीय महिला अधिकार मञ्चकी सदस्य र स्थानीय सडक निर्माण समितिमा सदस्य छिन्। 'म छलफल केन्द्रमा गएर पढेको धेरै भएको छैन, स्थानीय संरचनाको नेतृत्वमा पुग्ने कुरामा बल्ल बामे सर्दैछु,' उनले सुनाइन्।

त्यसो त उनलाई गाउँमा कस्ता-कस्ता संरचना हुन्छन्, कस्ता-कस्ता पद हुन्छन् ? त्यहाँ प्रतिनिधित्व गर्नेले केकस्तो भूमिका निर्वाह गर्नुपर्छ भन्ने पनि केही थाहा थिएन। अहिले कुनै पनि संरचना र तिनका पदसँग अभ्यस्त भइसकेकी छिन् उनी। स्थानीय संरचनामा प्रतिनिधित्व गर्न थालेपछि उनले धेरै कुरा थाहा पाइन्। त्यस्ता संरचनामा रहने विभिन्न पदबारे, त्यसको भूमिकाबारे जानकारीमात्र होइन, सफल र प्रभावकारी बन्ने उपायसमेत उनलाई थाहा छ।

'अरूले अध्यक्ष, सचिव भनेर कुरा गरेको सुन्दा पनि मलाई अचम्म लाग्थ्यो,' भविसराले भनिन्। कतिपय संरचनामा नेतृत्वमै पुग्न पहल गरिरहेकी उनले विभिन्न पदमा बसेर प्रभावकारी काम गरेरै देखाइसकेकी छन्।

नारी उत्थान छलफल केन्द्र केवल नारी हितमा मात्र काम गर्दैन। भविसराको नेतृत्व पाएदेखि यसले स्थानीय समाजसेवाका विभिन्न काममा हात हालिसकेको छ। एउटा ताजा घटना यसको साक्षी छ, ०७१ फागुन २१ को।

'केही दिनअघि एउटी बहिनी सुत्केरी हुँदै थिइन्, श्रीमान अलि अल्लारे रहेछन्, हाम्रो सहयोगले उनको ज्यान बच्यो,' भविसराले सुनाइन्। उनका अनुसार सुत्केरी व्यथाले छट्पटाएकी ती महिलालाई स्वास्थ्यकर्मीले ५१ सय रूपैयाँ पर्ने सुई नलगाए ज्यान जोखिममा रहेको बताएका थिए।

'परिवार आर्थिकरूपले कमजोर थियो, केटोका बाबुआमा भारतमा थिए, श्रीमानले पैसा खोज्न नसकेपछि हामीले सहयोग संकलन गर्‍यौं,' उनले भनिन्। ती सुत्केरीलाई एम्बुलेन्समा सुर्खेत



पुऱ्याएर सुई लगाइएको थियो। यसका लागि जम्माजम्मी ८ हजार ८ सय रूपैयाँ खर्च भयो। त्यो सबै चन्दा संकलन गरेर जुटाएको उनले जानकारी दिइन्।

पछिल्ला समयमा आफ्ना लागि भन्दा पनि अरूलाई कसरी सहयोग गर्ने भन्नेमा ध्यान जाने गरेको उनको अनुभव छ। 'पहिला-पहिला यस्तो लाग्दैनथ्यो। आफू कसरी माथि पुग्ने र आफ्ना लागि फाइदा हुने काम कसरी गर्ने भन्ने मात्र चिन्ता हुन्थ्यो। अहिले त टोल-समाजका लागि कसरी राम्रो गर्न सक्छु, सबैले आफूप्रति भरोसा गरिदिऊन्जस्तो लाग्न थालेको छ,' छलफल केन्द्रले आफूभित्रको सोचाइमै परिवर्तन ल्याएको उनले महसुस गरेकी छन्।

'अझै महिलाले धेरै दुःख पाएका छन्, उनीहरूकै लागि केही गर्न पाए हुन्थ्यो भन्ने लाग्छ,' उनले सन्तोषको सास फेर्दै भनिन्।

भविसरा लामपोखरी सामुदायिक वनको २ नम्बर वडाअध्यक्ष पनि हुन्। उनले यो जिम्मेवारी सम्हाल्दा वनमा धेरै मुद्दा थिए। त्यसलाई कसरी हटाउने भन्नेमा भविसरा दत्तचित्त भएर लागिन्। वन डढेलो नियन्त्रण र अनधिकृत फँडानी नियन्त्रणमा सफलता पाएको उनले

बताइन् । केन्द्र र त्यहाँका सहभागीले बाढीपहिरोपीडित परिवारका लागि पनि राहत रकम जुटाए । गाविसस्तरीय महिला सञ्जालकी अध्यक्ष भएका नाताले उनले आफ्नो वडाबाट राहत रकम र चन्दा संकलनमा पनि विशेष भूमिका निभाइन् ।

भविसराका अनुसार यो केन्द्रले केही महिनाअघि मात्र जन्मदर्ता, विवाह दर्ता, नागरिकता भए-नभएको जस्ता स्थानीयका आधारभूत पक्ष पत्ता लगाउन घरदैलो कार्यक्रम चलाएको थियो । स्थानीय नौजनाको नागरिकता रहेनछ, केन्द्रकै पहलमा उनीहरूले नागरिकता पाए । दोस्रोपटक घरदैलो गर्दा ३८ जनाको नामावली तयार गरेको भविसरा सुनाउँछिन् ।

भविसरा सदस्य रहेको सडक निर्माण समितिले गुमीको शिवनगरचोकबाट जाजरकोटको घारीसम्मको बाटो ग्राभेल गराइरहेको छ ।

०४८ सालमा वैवाहिक सम्बन्ध गाँसेकी भविसराका श्रीमान आर्थिक अभावकै कारण भारतमा काम गर्छन् । वर्षमा एकपटक मात्र घर आउँछन् । आर्थिक स्थिति कमजोर रहेको भविसराको परिवारसँग घडेरी र घरमात्र छ । अरूको खेतीपाती, बाख्रा र कुखुरा पाल्ने काम गरेर परिवारको जीविका चल्दै आएको छ । बिरामी आमाबुबालाई पनि आफ्नै घरमा ल्याएर उपचार गराइरहेकी छन् भविसराले ।

‘घरपरिवारमा मलाई सबैभन्दा धेरै सहयोग छोराले गर्छ । उसले मलाई महिला अगाडि बढ्नुपर्छ, सामाजिक कार्यमा लाग्नुपर्छ भनेर बारम्बार सिकाइरहन्छ,’ भविसरा सुनाउँछिन् । उनका दुई छोरा छन् । बाह्र कक्षा उत्तीर्ण जेठो छोरो सुर्खेत छिन्चुमा थप शिक्षा लिइरहेको छ ।

नारी उत्थान छलफल केन्द्रकी सहजकर्ता हरिमाया विक भविसराको नेतृत्वमा केन्द्रबाट धेरै महिला सक्षम बन्दै गएको बताउँछिन् । उनका अनुसार केन्द्रमा आउने महिलाको बोलीको विकास भएको छ । उनीहरूले आफूमा व्यक्तिगत क्षमता विकास गर्ने अवसर पाएका छन् । संरचना र नेतृत्वबारे धेरै बुझ्न थालेका छन् ।

‘भविसराजस्तै धेरै महिला दिदीहरू सक्षम हुँदै जानुभएको छ,’ उनले भनिन् । हरिमायाका अनुसार यस केन्द्रले महिला हिंसा, घरझगडा, टोल र समाजका विवाद मिलाउने काममा पनि सफलता हात पारिरहेको छ ।

महिला-पुरुष समविकास छलफल केन्द्र

फाखेल गाउँ विकास समिति-२, बन्टोल, मकवानपुर



# महिला सिर्जनशीलताको नमुना गाउँ

गजबको कुरा त महिलाका सांस्कृतिक कार्यक्रममा गाउँका पुरुषमा पनि उत्तिकै रुचि बढेको छ। आफूहरूमाथि गरिएको व्यंग्य पनि उनीहरू एकचित्त भएर सुन्छन्। नाचगानका समयमा मादल बजाइदिन्छन्। ताली बजाएर महिलाको हौसला बढाइदिन्छन्।

मकवानपुर जिल्लाअन्तर्गत रहे पनि राजधानी उपत्यकाबाट नजिकैको गाउँ हो- फाखेल। यो काठमाडौँ जिल्लाको फर्पिङ गाविससँग जोडिएको छ। फर्पिङ-कुलेखानी सडक खण्डबाट दायाँतर्फ करिब एक किलोमिटर ठाडो बाटो उक्लिएपछि फाखेलको दुई नम्बर वडामा रहेको तामाङ बस्ती बन्टोल पुगिन्छ।

०७१ फागुन १५ गते दिउँसो पौने एक बजेतिर यही गाउँ पछ्याउँदै बन्टोल पुग्यो, नेपाल वातावरण पत्रकार समूह (नेफेज) को टोली। सडकबाट करिब १५ मिनेट उक्लिएपछि बन्टोल आइपुग्यो। स्थानीय भाइको सहयोगमा हामीले गन्तव्य पहिल्यायौँ-मनमती डिम्डुङको घर।

आँगन भरिभराउ थियो। गाउँभरका महिला र पुरुष जम्मा भएका थिए मनमतीको आँगनमा। हामी पुग्ने खबर उनीहरूमाझ पहिल्यै पुगिसकेको रहेछ। हातमा लालीगुँरासका गुच्छा र स्टिलका थालमा रातो अबिर बोकेर पंक्तिबद्ध थिए महिला, पाहुनाको स्वागत गर्न। हातमा फक्रिएको गुराँसका गुच्छा सुम्पिँदै निधार अबिरले रंग्याइदिए। दिल खोलेर स्वागत गरे स्थानीयले हाम्रो टोलीलाई।

बाहिरी मानिस गाउँ पुग्दा यसरी झुम्मिने बानी परेको धेरै भएको छैन बन्टोलको तामाङ बस्तीका महिलामा। 'महिला-पुरुष समविकास छलफल केन्द्र' खुलेपछि छिट्टै परिवर्तन आयो गाउँमा।

केन्द्रका सहजकर्ता बलराम तामाङका अनुसार बाहिरी मान्छे देख्नेबित्तिकै ढोका थुनेर लुक्थे यहाँका महिला। नौला मानिससँग बोल्ने, परिचय गर्ने र स्वागत गर्ने त धेरै परको कुरा। 'पुरुषहरू बाहिरी मान्छे सहभागी हुने कार्यक्रममा महिलालाई पठाउनै मान्दैनथे,' बलरामले सुनाए, 'गाउँलेमा अहिले ठूलो परिवर्तन आएको छ।'

उनको अनुभवमा यहाँका महिला र पुरुष केही महिनायता महिला अधिकार, हिंसा र लैंगिक विभेदबारे धेरै जानकार भएका छन्। महिलामा चेतना बढ्दै छ। पुरुषमा पनि परिवर्तन देखिन थालेको छ। छलफल केन्द्रकी सहभागी मनमती डिम्डुङको घरआँगन हामीलाई स्वागत गर्न गाउँका महिला-पुरुषले भरिभराउ हुनु यसैको सग्लो प्रमाण थियो।

स्वागत सकिएपछि उनीहरू तुरुन्तै हामीलाई नाटक देखाउन तयार भए। स्थानीय महिलाको



सक्रियता देख्दा लाग्थ्यो, उनीहरू कुनै व्यावसायिक थियटरका कलाकार हुन्, सहरबाट गाउँमा नाटक देखाउन आएका। स्थानीय महिला र युवतीले छोरीबुहारीमाथि हुने गरेका हिंसाविरुद्ध सशक्त नाटक प्रदर्शन गरे। जीवन्त अभिनय गरेर। नाटकको सन्देश थियो, 'छोरीबुहारीलाई पनि पढाउनुपर्छ। सामाजिक कार्यमा लगाउनुपर्छ, उनीहरूको अधिकार कुण्ठित पार्नुहुन्न, घरगृहस्थीमा मात्र सीमित राख्नुहुन्न।'

मन्जु रुम्बा, मनमती डिम्डुङ, पुमिला गोले, सेम्प्रिना ब्लोन, सुनिता ब्लोन, रजनी डिम्डुङ नाटकका सशक्त कलाकार थिए। 'यो नाटक यी महिला आफैँले सिर्जना गरेका,' सहजकर्ता बलराम स्थानीय महिलामा आएको परिवर्तनबाट खुसी हुँदै सुनाए, 'हिजो नौला मानिससँग बोल्न पनि हिच्किचाउँथे, आज यी हेर्नुस् न!'

त्यसो त नाटक तयार पार्न पुरुषहरूले पनि सहयोग गरिरहेका थिए। उनीहरू अहिले स्थानीय कार्यक्रम र समारोहमा पनि यो नाटक मञ्चन गरेर सन्देश बाँडिरहेका छन्।

यति मात्र कहाँ! छलफल केन्द्रमा पनि यहाँका महिला-पुरुष महिलाका अधिकार र मुद्दा

समेटेर गीत गाउँछन्। नाचगान गर्छन्। यसले कक्षामा महिला उपस्थिति र आकर्षण बढाउँछ, सिकाइ प्रभावकारी बनाउँछ र महिलालाई सशक्त र सक्षम बनाउन सघाउँछ। घरभित्रका पीडा र कुरीति समेटेर गाइने गीतले मन खुसी र आनन्दित हुने उनीहरूको अनुभव छ।

'नाटक र नाचगानले महिलाहरू छलफल केन्द्रप्रति बढी आकर्षित भएका छन्,' केन्द्रकी सक्रिय सहभागी मञ्जु रुम्बा भन्छिन्, उनीहरूको संख्या दिनप्रतिदिन बढ्दो छ।'

गजबको कुरा त महिलाका सांस्कृतिक कार्यक्रममा गाउँका पुरुषमा पनि उत्तिकै रुचि बढेको छ। आफूहरूमाथि गरिएको व्यंग्य पनि उनीहरू एकचित्त भएर सुन्छन्। नाचगानका समयमा मादल बजाइदिन्छन्। ताली बजाएर महिलाको हौसला बढाइदिन्छन्।

यतिमात्र होइन, स्थानीय महिला राष्ट्रिय रूपमा मनाइने महिलाका कुनै पनि स्थानीय कार्यक्रम सफल पार्न उनीहरू एकजुट हुन्छन्। कार्यक्रम र समारोहका दिन महिलाहरू भेला भएर गाउँटोलभरि ऱ्याली निकाल्छन्। यसका लागि उनीहरूले ब्याट्रीबाट चल्ने हाते-माइक पनि किनेका छन्। 'महिला हिंसा अन्त्य गर', 'आमाको नामबाट नागरिकता पाउनुपर्छ', 'महिला-पुरुष बराबरी', 'महिला-पुरुष संयुक्त लालपुर्जा हुनैपर्छ', 'बहुविवाह गर्नेलाई कारबाही गर', 'महिला हिंसा रोक्नै पर्छ' जस्ता अधिकारमुखी नारा गाउँघरमा लगाउँदै हिँड्छन्।

बन्टोलमा छलफल केन्द्र सुरु भएको धेरै भएको छैन। सहजकर्ता बलरामको अनुभवमा महिलामा देखिएको सक्रियता, सिर्जनशीलता र चेतना छोटो अवधिका उपलब्धि हुन्। अन्य ठाउँमा जस्तो यहाँ शिक्षित पुरुषको संख्या धेरै छैन। पुरुष र महिला दुवै अशिक्षित छन्, फाखेल-२ मा। त्यसैले यहाँ छलफल केन्द्रको नाम पनि 'महिला-पुरुष समविकास छलफल केन्द्र' राखिएको हो। सहजकर्ता पनि पुरुष बसेका हुन्।

महिला शिक्षित हुन थालेपछि पुरुषले पनि बुझ्ने मौका पाएको अनुभव सुनाउँछन्, फाखेल-२, राकस खोलाका चन्द्रबहादुर घिसिङ। 'परिवारलाई दबाबमा राखेर आफू हिरो बनेर हिँड्नु राम्रो होइन भन्ने गाउँका पुरुषमा चेतना आउन थालेको छ,' उनले सुनाए।

छलफल केन्द्रकी नयाँ सदस्य सुनिता ब्लोनले सुरुमा छलफल केन्द्र आउन निकै अप्ठ्यारो



मानेकी थिइन् । सहजकर्ताले पटक-पटक अनुरोध गर्दा पनि उनी आइनन् । केन्द्रमा नाटक र छलफल पनि हुन्छ भन्ने थाहा पाएपछि भने उनलाई पनि रमाइलो हेर्न मन लाग्यो ।

हिजोआज उनका दिन रमाइला हुन थालेका छन् । घरको काम सकेर सुनिता केन्द्रमा आउँछिन् र आफ्ना दुःखसुख साथी-संगीसँग बाँड्छिन् ।

बलरामका अनुसार अहिले केन्द्रमा बढीमा २५ जना महिला हुन्छन् । कहिलेकाहीँ कामविशेषले यो संख्या घटेर १३ जनासम्म पुग्छ । सातामा तीन दिन आइतबार, मंगलबार र बिहीबार २ घन्टा केन्द्र सञ्चालन हुन्छ ।

त्यसो त छलफल केन्द्रमा महिला सहभागिता बढाउन बलरामले कम्ती प्रयास गरेका छैनन् । घरदैलो कार्यक्रम, राजनीतिक दलका प्रतिनिधिको उपस्थितिमा वडाभेला पनि गराएका छन् । बन्टोल फाखेलको ठूलो बस्ती हो । यहाँ विपन्न घरपरिवारको बसोबास छ । अधिकांश बासिन्दा राज्यको सेवा-सुविधाबाट वञ्चित छन् । 'त्यसैले यो ठाउँ रोजेका हौँ,' बलरामले भने ।

उनका अनुसार जनचेतनामूलक कार्यक्रमबाहेक केन्द्रका सहभागीले टोल-समाजका विकृति र कुरीति अन्त्यनिम्ति पनि काम गर्न थालेका छन्। यहाँ पनि अन्यत्रजस्तै घरेलु हिंसा धेरै हुने गरेका छन्। विशेषगरी जाँड-रक्सीको कुलतले जरा गाडेको छ। जुवातासका खालले त्यत्तिकै बिगारेको छ गाउँका पुरुषलाई।

'यस्ता कुरीति अन्त्यका लागि पनि काम गरिरहेका छौँ,' बलरामले भने, 'अझ प्रभावकारी र सशक्त ढंगले कसरी जान सकिन्छ भन्ने विषयमा केन्द्रमा छलफल गरिरहन्छौँ।'

बन्टोलका महिलाका गतिविधि नियालेर हाम्रो टोली स्थानीयसँग बिदाबारी हुँदा मञ्जु रुम्बा भन्दै थिइन्, 'हामी भर्खरै बामे सर्दैछौँ, अर्कोपटक आउँदा तपाईंहरूले हाम्रो धेरै प्रगति देख्नुहुनेछ।' यतिञ्जेल उनले हाम्रो टोलीलाई अर्को कार्यक्रमको निम्तो दिन भ्याइसकेकी थिइन्।

मकवानपुरकै मार्खु गाविस-१, सर्वाङमा पनि भर्खरै छलफल केन्द्र सुरु भएको छ। 'शक्तेश्वर महिला सामुदायिक छलफल केन्द्र' बिस्तारै बामे सर्ने क्रममा छ त्यहाँ। केन्द्रकी सहजकर्ता आइतीमाया थिङ महिलाको उपस्थिति कसरी बढाउन सकिन्छ भन्ने ध्याउन्नमा छिन् तर पनि कक्षाहरू सञ्चालन भइरहेका छन्।

यस केन्द्रकी सशक्त महिला सदस्य हुन्, कान्छी गोले। उनले स्थानीयदेखि जिल्लास्तरसम्मका संरचनामा नेतृत्व गरिसकेकी छन्। स्थानीय तहमा उनको नेतृत्व या प्रतिनिधित्व नभएको संस्था सायद छैन। २०४६ सालदेखि अहिलेसम्म सामाजिक कार्यकर्ता र नेत्री भएर काम गरिरहेकी छन् गोले। यसबीचका अनुभव र संघर्षले खारिएकी कान्छी भन्छिन्, 'अब मेरो उद्देश्य एउटै छ, धेरै महिलालाई म जस्तै नेतृत्व तहमा पुऱ्याउने।'

उनको विचारमा स्थानीय छलफल केन्द्र महिलाको नेतृत्व विकासका लागि उपयुक्त माध्यम हुनसक्छ। कान्छी आफ्नो सक्रियता र सफल नेतृत्वका कारण धेरै संघसंस्थाबाट सम्मानित र पुरस्कृत भइसकेकी छन्।

उनको अभिभावकत्वमा यो छलफल केन्द्र सञ्चालन भइरहेको छ। ५७ वर्षीया गोलेको अनुभव र नेतृत्व क्षमताले आगामी दिनमा यो केन्द्र प्रभावकारी बन्नसक्छ भन्ने विश्वासमा छिन्, यस केन्द्रकी सहजकर्ता आइतीमाया थिङ।

‘कक्षा सञ्चालन हुन लागेको भर्खरै हो, त्यसैले धेरै काम गर्न सकिएको छैन तर पनि यसलाई नियमित र प्रभावकारी बनाउने योजना बनाइरहेकी छु,’ सबैकी भरोसा कान्छी गोलेले भनिन्। कान्छी स्थानीय टोल, समाज र गाविसका हरेक घरपरिवारबारे जानकार छिन्। उनको यही अनुभवले यो केन्द्र आगामी दिनमा महिला अधिकार स्थापित गर्दै घरेलु हिंसा अन्त्य र महिलालाई नेतृत्व तहमा पुर्‍याउन सफल हुने विश्वास व्यक्त गर्छिन्, महिला नेतृत्व कार्यक्रमकी मार्खु गाविस सामाजिक परिचालक सम्झना बलामी।

सुर्खेत जिल्लाका गाविसमा सञ्चालन भएको कार्यक्रमको सफलतालाई निरन्तरता दिने उद्देश्यले मकवानपुरका चित्लाङ, मार्खु, कुलेखानी, सिस्नेरी र फाखेल गाविसमा पनि छलफल केन्द्र स्थापना गरिएका छन्। ती केन्द्रमा महिलाको उपस्थिति विस्तारै बढ्दै गएको छ। जिल्लास्तरका परिचालकले सबै छलफल केन्द्रका सहजकर्तालाई संरचना र नेतृत्व विकासलगायत तालिम दिइरहेका छन्। सहजकर्ताले आफ्ना केन्द्रका सहभागी महिलालाई त्यहीअनुसार पढाइरहेका छन्।

